६ आन्टीरियेर येथमयेडल फोरामेन।
७ पोष्टीरियेर येथमयेडल फोरामेन।
८ मेलार फोरामेन।
९ केनाल्स फर्दिनेजल डाक्ट।

## नेजल फसिको बयान।

यो २ लार्ज इरेगुलर क्याभिटिज हुन्छ। फेसको मिडिल लाइन र २दिग्मा रहन्छ। क्रेनियामको वेसदेखि, माउथको रुफ सम्म रहन्छ। १ थिन भार्टिकेल सेप्टमले २ भाग गराउ छ। २ लार्ज अपरचर्स ११ नेजलफसाको आन्टीरियेरमा र पोष्टीरियेरमा रहन्छ। फेस्को फ्रान्टमा आन्टीरियेरनेरिस रहन्छ। फेरिङ्गसको वीहाईन्डमा पोष्टीरियेरनेरिस रहन्छ।

यो नेजल फसि वोलो भन्दा आवभ न्यारो हुन्छ। ११ नेजल फसिको साथ ४ साइन्सेस कम्युनिकेट गर्छ। आवभमा फ्रान्टल साइनसको साथ, वीहाईन्डमा स्फिनायेडल साइनसको साथ, आउटर वालमा म्याक्सिलरि र येथमयेडल साइनसको साथ मील्छ।

११ फसाको साथ ४ क्याभिटिज कम्युनिकेट गर्छ। ल्याक्रिमेल ग्रुभ दीयेर अर्बिट सङ्ग मील्छ। आन्टीरियेर प्यालेटाइन केनाल दोयेर माउथ सङ्ग मील्छ। अल्फ्याक्टरि फोरामिना दीयेर क्रेनियाम सङ्ग मील्छ। स्फीनो प्यालेटाइन फोरामिना दीयेर स्फीनो म्याक्सिलरि फसा सङ्ग मील्छ। सेप्टमको १ फोरामेन दीयेर १ नेजल फसा दोस्रो नेजल फसाको साथ मील्छ।

१४ बोन्सले नेजल फसि बन्छ।

क्रेनियामको ३।

फ्रान्टल बोन १

स्फीनायेड ,, १

येथ्मयेड ,, १

फेसमा।

लोवारज र मेलार बाहेक अरु जम्मा बोन्स।

१। १ नेजल फसाको १ रुफ, १ फ्लोर, १ इन्नरवाल, १ आउटरवाल हुन्छ।

रुफको दोस्रो नाम अपर वाल, येस्को फ्रान्टमा नेजल बोन्स र फ्रान्टलको नेजल स्पाइनले बन्छ। मिडिलमा येथ्मयेडको क्रिब्रीफारम प्लेटले बन्छ। बोहाईन्डमा स्फीनायेडको बाडीको अन्डर सर्फेस र स्फीनायेडल टार्बिनेटेड बोन्सले र येला आफ दी भोमर प्यालेट बोनको स्फीनायेडल प्रसेसले बन्छ।

फ्लोरको फ्रान्टमा सुपीरियर म्याक्सिलरिको प्यालेट प्रसेसले बन्छ। बोहाईन्डमा प्यालेट बोनको प्यालेट प्रसेसले बन्छ।

इन्नर वाल दोस्रो नाम सेप्टम, येस्को फ्रान्टमा नेजल बोन्सको क्रेष्ट र फ्रान्टलको नेजल स्पाईनले बन्छ। मिडिलमा येथ्मयेडको पार्पेन्डीक्युलर प्लेटले बोहाईन्डमा भोमर र स्फीनायेडको रष्ट्रामले बीलोमा सुपीरियर म्याक्सिलरिको क्रेष्टले र प्यालेट बोनले बन्छ।

आउटर वालको फ्रान्टमा सुपीरियर म्याक्सिलरिको नेजल प्रसेसले र ल्याक्रिमेल बोन्सले बन्छ। मिडिलमा येथ्मयेड र सुपीरियर म्याक्सिलरिको इन्नर सर्फेसले र इन्फीरियर टार्बिनेटेड

बोन्सले बन्छ। वीहाईन्डमा प्यालेट बोनको भार्टिकेल-प्लेटले र स्फीनायेडको इन्टर्नल टेरिगयेड प्लेटले बन्छ। यो सर्फेसमा नोजको ३ मीयेटासेस रहन्छ। नाम—

सुपीरियेर मियेटस १
मिडिल १
इन्फीरियेर १

नेजल फसिको अगाडीको बोप्रोड्लाई आन्टीरियेर नेरिस भनिन्छ। ताजा भयाको वखतमा नोजको कार्टिलेजले सानु भै रहन्छ।

नेजल फसिको पछाडीको बोप्रिडलाई पोष्टीरियेर नेरिस भनिन्छ। यो पोष्टीरियेर नेरिस फेरिङ्सको अपर पार्टको साथ मीलछ।

## हायेड बोनको बयान।

येस्को दोस्रो नाम लीङ्गुयाल बोन पनी भन्छन्। येस्को आकार हर्सु जस्तो हुन्छ।

यो ५ हिस्साले बन्छ।

१ बाडी।
२ ग्रेटर कर्नुवा।
२ लेसर कर्नुवा।

ष्टाइलयेड प्रसेसको टीपमा ष्टाइलोहायोयेड लीगामेन्टले झुन्डयाउँ छ।

येस्को बाडीको बयान।

यो बाडी काड्रिलयाटास्याल हुन्छ। येस्को आन्टीरियेर

सर्फेस कन्भेक्स हुन्छ। फर्वार्ड र अपवार्डदिग्मा जान्छ। येस्को आङ्गमा २ रिज छ। नाम—

१ भार्टिकेल रिज।

२ होराईजेन्टलरिज।

यो २ रिज जाहाँ मिल्छ उही ठाउँमा १ ट्युबर्कल छ। येस्को ४ दिग्मा ४ डीप्रेसन देखिन्छ। यो सर्फेसमा जीनीहोयायोयेड मासल आटाचमेन्ट हुन्छ। येस्को आबममा जीनीयो हायोग्लोसरा, बीलोमा माइलो हायोयेड, ष्टाइलो हायोयेड, डाइगष्ट्रिकको आपोन्युरेसिस र हायोग्लोसस मासल्सको १ पार्ट आटाचमेन्ट हुन्छ।

पोष्टीरियेर सर्फेस स्मुथ र कन्केभ हुन्छ। ब्याकवार्ड र डाउनवार्ड दिग्मा जान्छ। येसले येपिग्लटिसलाई थाइरो हायेडमेम्ब्रेन र अरिओलार टीस्युदीयेर सेपारेट गर्छ।

सुपीरियेर बर्डर राउन्ड हुन्छ। थाइरोहायेडमेम्ब्रेन र जीनीयोहो ग्लोसाई र कन्डोग्लोसाई मासलको १पार्ट आटाचमेन्ट हुन्छ।

इन्फीरियेर बर्डरको फ्रान्टमा ष्टार्नोहायोयेड मासल आटाचमेन्ट हुन्छ। बीहाईन्डमा बाडी र ग्रेटर कर्नुवा जाहाँ मील्छ, तेस ठाउँमा वोमोह्मयोयेड र थाइरोहायोयेड मासल्सको १ पार्ट आटाचमेन्ट हुन्छ।

ल्याटारस्याल सर्फेसेसमा स्याल ओभेल कन्भेक्स फ्यासेट्स हुन्छ। ग्रेटर कर्नुवाको साथ आर्टिकुलेशन हुनलाई कार्टिलेज रहन्छ।

ग्रेटर कर्नुवाको बयान।

• वाडीको ल्याटरुवाल सर्फेसवाट ब्याकवार्डदिग्मा प्रोजेक्ट छ। ल्याटास्वाल थाइरोहायोयेड लीगामेन्टको आटाचमेन्ट दीनगई पोष्टीरियेरदिग्मा १ ट्युवर्कल रहन्छ। येस्को आउटर सर्फेसमा हायोग्लोसस मासल आटाचमेन्ट हुन्छ।

अपर वर्डरमा मिडिल कन्सट्रीक्टर आफ दी फेरिङ्स र लोवर वर्डरमा थाइरोहायोयेड मासलको १ पार्ट आटाचमेन्ट हुन्छ।

लेसर कर्नुवाको बयान।

यो वाडी र ग्रेटर कर्नुवा जाहाँ मीलछ तेसै ठाउँमा २ स्माल सिङ जस्तो येमिनेन्सेस हुन्छ, येसैमा ष्टाइलो हायोयेड लीगामेन्ट्स आटाचमेन्ट हुन्छ।

हायोयेड बोनको मासलस।

१ ष्टार्नो हायोयेड।
२ थाइरो „ ।
३ वोमो „ ।
४ ष्टाइलो „ ।
५ माइलो „ ।
६ जीनीयो „ ।
७ आपोन्युरेसिस आफ दी डाइगष्ट्रीक।
८ जीनीयो हायोग्लोसस।
९ कन्डीग्लोसस।
१० हायोग्लोसस।
११ मिडिल कन्सट्रिक्टर आफ दी फेरिङ्स।

१२ इन्फीरियेर लिङ्गुयालिस मासल कसैको लाग्छ।
कसैको लाग्दैन ।

येही बोनमा थाइरो हायोयेडीयान मेम्ब्रेन, ष्टाइलो हायोयेट, थाइरो हायोयेड, हायोयेपिग्लट्टिक लीगामेन्ट्स आटाच्मेन्ट हुन्छ।

यो हायेड बोनको आर्टिकुलेशन छैन ।

## थोर्‍याक्सको बयान ।

रेसिपरेशन र सार्कुलेशन्सको अर्ग्यान्स राखि रक्षा गर्नलाई जो हाड र कार्टिलेजले बनेको पीञ्जरा जस्तो हुन्छ, येसैको नाम थोर्‍याक्स भन्छन, ( दोस्रो नाम ) चेष्ट भन्छन । येस्को आकार कनिक्याल हुन्छ। आबभ न्यारो, बीलो ब्रड, बीफोरदेखि ब्याक-पार्टसम्म फ्ल्याट हुन्छ। फ्रान्ट भन्दा बीहाइन्ड लाङ्ग हुन्छ।

येस्को बाउन्डरीज ।

येस्को पोष्टीरियेर सर्फेसमा १२ डर्सल भार्टिब्री र रिब्सको पोष्टीरियेर पार्टले बन्छ, यो आबभदेखि डाउनवार्डसम्म कन्भेक्स हुन्छ। आन्टीरियेर सर्फेस फ्ल्याट र थोरै कन्केभ हुन्छ। आबभदेखि डाउनवार्ड र फर्वार्डदिग्मा जान्छ, यो आन्टीरियेर सर्फेस ष्टार्नाम र कष्टल कार्टिलेजेसले बन्छ।

ल्याटारल सर्फेस कन्भेक्स हुन्छ। यो रिब्सले बन्छ। यो २ रिब्सको बीचमा जो ठाउँ छ। उस्को नाम इन्टरकष्टल स्पेस भन्छन। येहि इन्टरकष्टल स्पेसेस ११ हुन्छन। यो ठाउँमा इन्टरकष्टल मासल्स रहन्छ।

थोर्‍याक्सको अपर ओप्रीङ मृगौलाको आकार जस्तो हुन्छ। वीफोरदेखि ब्याकपार्ट भन्दा दाहिना, वाजा ब्रड हुन्छ। यो अपर ओप्रीङको वीहाईन्डमा फाष्ट डर्सल भार्टिब्रा फ्रान्टमा ष्टार्नामको अपर मार्जीन साईडमा फाष्ट रिव रहन्छ।

लोवर ओप्रीङको वीहाईन्डमा ट्वेल्थ डर्सल भार्टिब्राको साइडमा ट्वेल्थ रिव, फ्रान्टमा ११ (येलेभेन्थ)। १० (टैन्थ)। ९(नाइन्थ)। ८ (एट्थ) र ७ (सेभेन्थ) रिव्सको कार्टिलेजेस रहन्छ।

२ दिग्को कार्टिलेजेस मिलेर जो आङ्गल हुन्छ। नाम साव कष्टल आङ्गल भन्छन, येहि आङ्गलको सेन्टरवाट आन्सीफारम कार्टिलेज प्रोजेक्ट गर्छ।

येही लोवर ओप्रीङ वीफोरदेखि ब्याकवाड भन्दा ट्रान्स-भर्सदिग्मा वाइड हुन्छ। थोर्‍याक्सको क्याभिटि फ्रान्ट भन्दा वीहाईन्ड डिप हुन्छ। डायाफ्राम मासलले यो ओप्रीङलाई वन्द गर्छ। यो डायाफ्राम मासलले थोर्‍याक्सको फ्लोर वन्छ। मेलको भन्दा फीमेलको थोर्‍याक्स कोही फराक हुन्छ।

१ फीमेलको थोर्‍याक्स भीत्र धेरै चीज रहने जगा छैन।

२ फीमेलको ष्टार्नाम सर्ट हुन्छ।

३ फीमेलको ष्टार्नामको अपर मार्जीन थार्ड डर्सल भार्टिब्राको वाडीको लोवर पार्टको लेभेलमा रहन्छ। मेलको ष्टार्नामको अपर मार्जीन सेकेन्ड डर्सल भार्टिब्राको वाडीको लोवर पार्टको लेभेलमा रहन्छ।

४ फीमेलको अपर रिव्स मेलको भन्दा चल्छ।

## ष्टार्नामको बयान।

यो फ्ल्याट र न्यारो हुन्छ। चेष्टको फ्रान्ट र मिडिलमा रहन्छ। उमेरदार भया पछी येस्को ३ पोर्सन्स हुन्छ।

१ अपर पिसको नाम म्यानुब्रीयाम।

२ मिडिल पिस लार्ज हुन्छ। नाम ग्लाडिवोलास।

३ इन्फीयेर पिसको नाम। ऐन्सीफारम २ नाम वजीफायेड, आपेन्डीक्स भन्छ, यो ष्टार्नामको फ्रान्ट फ्ल्याट, बीहाईन्ड कन्केभ, आवभ ब्रड हुन्छ। फाष्ट पिस र सेकेन्ड पिस जाहाँ मीलछ उही ठाउँमा न्यारो हुन्छ। येस्को लेन्थ उमेरदार भया पछी ६ इञ्च लामो हुन्छ। फीमेल भन्दा मेलको लामो हुन्छ।

---

### म्यानुब्रीयाम

अथवा

फाष्टपीस आफ दी ष्टार्नामको बयान।

यो ट्राइयाङ्गुलर हुन्छ। आवभ ब्रड र थिक हुन्छ। बीलो न्यारो हुन्छ।

आन्टीरियेर सर्फेस दाहिनादेखि बाञा कन्भेक्स हुन्छ। आवभदेखि डाउनवार्ड कन्केभ र स्मुथ हुन्छ। येस्को २ दिश्मा पेक्टोस्यालीस मेजर मासल आटाचमेन्ट हुन्छ र ष्टार्नो क्लीडोम्याष्टयेड मासलको ष्टार्नेल अरिजिन हुन्छ।

पोष्टेरियेर सर्फेस कन्केभ र स्मुथ हुन्छ। येस्को २ दिश्मा ष्टार्नोहायेड र ष्टार्नोथाइरयेड मासल्स आटाचमेन्ट हुन्छ।

येस्को सुपीरियेर वर्डर थिक हुन्छ। येस्को सेन्टरमा १ नच छ। नाम प्रीयेस्सटर्नल नच, येस्को २ दिग्मा १ ओभ्याल आर्टिक्युलर सर्फेस छ। क्लाभीकलका ष्टार्नलयेडको साथ आर्टिकुलेशन हुन्छ।

इन्फीरियेर वर्डरमा १ वोभ्याल राफ सर्फेस छ। येसैमा आलो भयामा कार्टिलेज देखिन्छ। यो ष्टार्नामको सेकेन्ड पिसको साथ आर्टिकुलेशन हुन्छ।

ल्याटास्याल वर्डरको आवभमा फाष्ट कष्टल कार्टिलेजलाई १ डीप्रेसन देखिन्छ। वीलोमा १ स्माल फ्यासेट छ, येसैमा सेकेन्ड रिब्सको कष्टल कार्टिलेज लाग्छ।

---

## सेकेन्ड पिस आफ दी ष्टार्नाम

अथवा

ग्लाडिवोलासको वयान।

यो लाङ्ग न्यारो र थिन हुन्छ। आवभ भन्दा चीलो व्रड हुन्छ। येस्को आन्टीरियेर सर्फेस फ्ल्याट हुन्छ। येस्को ट्र्यान्सभर्स दिग्मा ३ लाइन्स हुन्छन। यो थार्ड, फोर्थ र फीफ्थ, आर्टिकुलर डीप्रेसन्स, येहि ट्र्यान्सभर्स लाइनको २ दिग्मा रहन्छ। कोही २को यो ठाउँमा १ फोरामेन देखिन्छ। नाम ष्टार्नेल फोरामेन भन्छन। यो सर्फेसको २ दिग्मा पेक्टोस्यालीस मेजर मासलको ष्टार्नेल अरिजिन हुन्छ।

येस्को पोष्टीरियेर सर्फेस थोरै कन्केभ हुन्छ। येसैको चीलोको २ दिग्मा ट्राइयाङ्गुलेरिस ष्टार्नाइ मासल आटाचमेन्ट हुन्छ।

सुपीरियेर वर्डरमा १ वोभ्याल सर्फेस छ। म्यानुब्रियाम
साथ आर्टिकुलेशन हुन्छ।

इन्फीरियेर वर्डर न्यारो हुन्छ। येन्सीफारम आपेन्डीक्स
साथ अर्टिकुलेशन हुन्छ।

ल्याटास्याल वर्डरको सुपीरियेर आङ्गलमा १ स्माल फ्य
सेट छ। म्यानुब्रियामको उही फ्यासेटको साथ मिलिकन सेके
रिवको कार्टिलेजलाई १ क्याभिटी बन्छ। येस्को तल्लोदिग्मा अ
४ आङ्गुलर डीप्रेसन्स हुन्छ। येसैमा थार्ड, फोर्थ, फिफ्थ र सिक्स
रिव्सको कार्टिलेजेज लाग्छ। येस्को इन्फीरियेर आङ्गलमा १ स्मा
फ्यासेट हुन्छ। यो आन्सीफारम आपेन्डिक्सको नचको सा
मिलि सेभेन्थ रिवको कार्टिलेज लाग्छ।

---

## थार्ड पिस आफ् दी

एर्नामको वयान।

येस्को (दोस्रो नाम) आन्सीफारम र क्जीफ्वायेड आपेन्डिक्स
भन्छन। यो अरु भन्दा स्माल हुन्छ। यो कमती उमेरमा कार्टि
लेज हुन्छ। उमेरदारमा येस्को अपर पार्ट अस्सिफायेड हुन्छ।

येस्को आन्टोरियेर सर्फेसमा कन्डोक्जोफ्वायेड लीगामेन्ट
आटाचमेन्ट हुन्छ।

येस्को पोष्टीरियेर सर्फेसमा डायाफ्रामको थोरै फाइवर्स
ट्राइयाङ्गुलेरिस ष्टार्नाई मासल्स आटाचमेन्ट हुन्छ।

ल्याटास्याल वर्डर्समा आव्डोमीनल मासल्सको आपोन्युरे
सिस लाग्छ। येस्को आत्रभमा ग्लुडोवोलासको लोवरयेन्डको सा

आर्टिकुलेशन हुन्छ। बीलोमा लीनीया आलबाको साथ आटाच-मेन्ट हुन्छ।

---

## ष्टार्नाम बोनको

आर्टिकुलेशन १६।

क्लाभिकल २। राइटमा १ लेफ्टमा १।

केण्टल कार्टिलेजेज १४। राइटमा ७ लेफ्टमा ७।

फाष्ट कण्टल कार्टिलेजदेखि सिक्स्थ कण्टल कार्टिलेज सम्म १।१ रिब झुण्डीयाको छ। सेभेन्थ कण्टल कार्टिलेजमा ४ रिब्स झुण्डीयाको छ।

---

## ष्टार्नामको मासल्स

९ जोड़ा १ बीजोड़ा हुन्छन।

१ पेक्टोरयालीस मेजर।
२ ष्टार्नोक्लीडोम्याष्टयेड।
३ ष्टार्नोहायेड।
४ ष्टार्नो थाइरयेड।
५ ट्राइयाङ्गुलेरिस ष्टार्नाई।
६ आपोन्युरेसिस आफ दी वोब्लीकस येक्सटर्नस।
७ वोब्लिकस इन्टर्नस।
८ ट्रयान्सभर्स सेलिस।
९ रेक्टस आपडोमेनिस।
१० डायाफ्राम बीजोड़ा।

## रिब्सको वयान ।

येसले थोरयाक्सको वाल वन्ने काम दिन्छ। यो ११ दि
१२।१२ गरि रहन्छ। (पैहो) ७ रिब्स वीहाईन्डमा स्पाइन
साथ मील्छ। फ्रान्टमा कष्टल कष्टलकार्टिलेजेस द्वीयेर ष्टार्नाम
साथ मील्छ। यैही ७ रिब्स मध्ये २ रिब्सको नाम। टु रिब्स भा
ष्ट्रोष्टार्नालरिब्स भन्छन, बाकी ५ रिब्सको नाम फल्सरि
भन्छन। यो फल्सरिब्स २ किसिमका हुन्छन्। यो पॉचको भीत्र(पैह
तीनको नाम। भार्टिब्रोकष्टल भन्छन, येस्को माथीको २ रिब्स
साथ जो कार्टिलेज छ, उसैको साथ लाग्छ बाकी २ रिब्स आन्
रियेर येक्सट्रिमीटीमा फ्री रहन्छ। यो दुइको नाम फ्लोटीङरि
र भार्टिब्रलरिब्स भन्छन।

रिब्सको वीच २ को अगालाई इन्टरकष्टल येस्पेस भन्छ
फाष्ट रिवदेखि सेभेन्थ रिवसम्म लामो हुँदै जान्छ। सेभेन्थदे
येलेभेन्थसम्म छोटो हुदै जान्छ। रिब्सको चौड़ाई आवमदे
डाउनवार्ड कम्ती हुदै जान्छ।

---

कमन्स्यारेक्टर आफ दी रिब्स ।

यो ११ रिवमा २।२ गरि येक्सट्रिमोटी हुन्छ। पोष्टीरि
२ नाम भार्टिब्रलयेक्सट्रिमिटी र आन्टीरियेर २ नाम ष्टार्नल
क्सट्रिमीटी। दोस्रा येक्सट्रिमीटीजको वीचको नाम वाडी र स्याफ
भन्छन।

---

नं २८ ष्टार्नाम पोष्टरियर सार्फेस।



१म। २ कष्टाल कार्टिलेज की साथ। ८। स्यानिष्ठ नियाम। ९। ग्लाडियो लास। १० । एन्सिफर्म एपेन्डिकस। ११। ष्टार्नो हायड। १२। ड्राइया जिल्लार ष्टार्नि। १३। ड्याया फ्राम। १४। ष्टार्नो थाइराइड।

## नं २८ ष्टार्नाम र कष्टाल कार्टिलेज।




क। ष्टार्न क्लाइडो म्यास्टयड। ख। सार्व क्लुभियास। ग घ ङ। पेकटोरालिस माईनर। च। पेक्टोरालिस मेजर। छ। स्यालिन्स नियास। ज। स्याञ्जियोलास। झ। एन् सिफस एप्राम् डिक्स्। ट। इण्टार क्लाभिकिउलार नच्। ठ। क्लाभिकिल को साथ। ड ढ। रेकटास एबडमिनिस। १—७ ट्रू रिब स। ८—१२ फल स रिब्स। १म—१०म कष्टाल क्यार्टिलेज।

## पोष्टीरियेर

अथवा

भार्टिब्रलयेष्सट्रिमीटीको बयान।

येसा १ हेड। १ नेक। १ ट्युबेरोसिटि रहन्छ।

हेडमा १ आर्टिकुलरसर्फेस रहन्छ। १ होराइजेन्टल रिजले यो सर्फेसलाई २ फ्यासेट्समा डिभाइड गर्छ। २ डर्सेल भार्टिब्रीको बाडीको बीचमा कट्टलक्याभिटी रहन्छ उसैको साथ आर्टिकुलेशन हुन्छ। रिबको र हेडको आउटबार्डदिग्मा जो फ्ल्याटपोर्सन रहन्छ। नाम, नेक। यो १ इञ्च लामो जत्ती हुन्छ। यो नेकको आन्टीरियेर सर्फेस फ्ल्याट र स्मुथ हुन्छ। पोष्टीरियेर सर्फेस राफ हुन्छ, येसैमा मिडिल कष्टो टथान्सभर्स लीगामेन्ट आटाचमेन्ट हुन्छ। सुपीरियेर वर्डरमा १ राफ क्रीष्ट हुन्छ। आन्टीरियेर कष्टो टथान्सभर्स लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को इन्फीरियेर वर्डर राउन्डेट हुन्छ। नेकको पोष्टीरियेर सर्फेसमा स्याफ्ट जाहाँ जोरिन्छ तसैमा १ येमीनेन्स छ। नाम ट्युबेरोसिटि दोस्रो नाम ट्युबर्कल भन्छन, येसैमा १ आर्टिकुलरपोर्सन र १ नान आर्टिकुलरपोर्सन छन।

आर्टिकुलरपोर्सनको इन्टर्नल र इन्फीरियेरदिग्मा १ स्माल वोभेल सर्फेस छ, येसैको साथ लोवर भार्टिब्राको ट्रान्सभर्स प्रसेसको येक्सट्रिमिटीको साथ आर्टिकुलेशन हुन्छ।

नान आर्टिकुलरपोर्सनमा १ राफ येलीभेसन्स छ, येसैमा पोष्टीरियेर कष्टो ट्रथान्सभर्स लीगामेन्ट आटाचमेन्ट हुन्छ।

स्याफ्ट थिन र फ्ल्याट हुन्छ, येस्को २ सर्फेसेस र २ वर्डर्स छन। १ इन्टर्नल सर्फेस। १ येक्सटर्नल सर्फेस। र १ सुपीरियेर वर्डर। १ इन्फीरियेर वर्डर।

येक्सटर्नल सर्फेसको बयान ।

यो कन्भेक्स र स्मुथ हुन्छ, येस्को ब्याकपार्टमा प्रमिनेन्ट लाइन हुन्छ। यो वोवोब्लिक भै डाउनवार्ड र आउटवार्ड जान्छ। नाम, आङ्गल। येसैमा इलीयोकष्टेलिस मासलको टेउन आटाचमेन्ट हुन्छ। आङ्गल ट्युबेरोसिटिको बीचमा लङ्गीसिमास डर्साई मासल आटाचमेन्ट हुन्छ। ष्टार्नल येक्सट्रिमिटीमा १ वोब्लिक लाइन हुन्छ। नाम आन्टीरियेर आङ्गल भन्छन।

इन्टर्नल सर्फेस कन्केभ र स्मुथ हुन्छ, येसैमा १ रिज छ। इन्फीरियेर वर्डर र यो रिजको बीचमा १ ग्रुभ छ। नाम साब कष्टल ग्रुभ, येसैमा इन्टर्नल इन्टरकष्टल भेसलस र नार्भ रहन्छ। यो ग्रुभको सुपीरियेर येज राउन्डेट हुन्छ, येसैमा इन्टर्नल इन्टरकष्टल मासल आटाचमेन्ट हुन्छ। इन्फीरियेर येजमा येक्सटर्नल इन्टरकष्टल मासल आटाचमेन्ट हुन्छ। सुपीरियेर वर्डर राउन्ड र थिक हुन्छ, येसैमा १ येक्सटर्नल लीप र १ इन्टर्नल लीप छन। येसैमा इन्टर्नल इन्टरकष्टल र येक्सटर्नल इन्टरकष्टल मासलस आटाचमेन्ट हुन्छ। आन्टीरियेर इन्टर्नल येक्सटिमिटी फ्ल्याट हुन्छ। येसैमा १ वोभ्याल कन्केभ डीप्रेसन छ। यो कष्टल कार्टिलेजको साथ लाग्छ।

---

## पिक्युलिअर रिब्सको बयान।

यो ५ हुन्छ।

(१) १ फाष्ट। (२) २ सेकेन्ड। (३) १० टैन्थ। (४) ११ येलेभेन्थ। (५) १२ ट्वेल्थ।

---

फाष्ट रिबको बयान।

यो सर्ट, ब्रड र फ्ल्याट हुन्छ, अरु सब रिब्स भन्दा यो कार्भ्ड हुन्छ। येस्को सर्फेस अपवार्ड र डाउनवार्ड जान्छ। येस्को वर्डर्स इनवार्ड र आउटवार्ड जान्छ। येस्को हेड स्माल र राउन्डेट हुन्छ। येसैमा फाष्ट डर्सेल भार्टिब्राको वाडीको साथ आर्टिकुलेशन हुनलाई १ आर्टिक्युलर फयासेट हुन्छ। येस्को नेक न्यारो र राउन्डेट हुन्छ। ट्युवेरोसिटि थिक र प्रामीनेन्ट हुन्छ। आउटर वर्डरमा रहन्छ, येसमा आङ्गल छैन।

स्याफ्टको अपर सर्फेसमा २ स्माल डीप्रेसन हुन्छ, यो २ डीप्रेसन्सको बीचमा १ स्माल राफ सर्फेस हुन्छ। येसैमा स्केनीलस आन्टाइकस मासल आटाचमेन्ट हुन्छ। यो मासलको फ्रान्टमा जो ग्रुभ रहन्छ, उसबाट सब क्लेभियान भेन जान्छ। यो मासलको बोहाईन्डमा जो ग्रुभ छ, उसबाट सब क्लेभियान आर्टरि जान्छ। ट्युवेरोसिटि र यो ग्रुभको बीचमा स्केलिनस मिडिआस मासलको आटाचमेन्ट हुनलाई १ राफ सर्फेस छ। येस्को आन्डर सर्फेस स्मुथ हुन्छ, अरुर रिब्समा भया जस्तो ग्रुभ येसमा छैन। येस्को आउटर वर्डर कन्भेक्स, र राउन्डेट थिक हुन्छ। येस्को पोष्टीरियेर पार्टमा सेरेटेड म्याग्नस मासलको १ पार्ट लाग्छ। इन्नर वर्डर कन्केभ, थिन र सार्फ हुन्छ। येस्को सेन्टरमा स्केलिनस आन्टाइकस मासलको आटाचमेन्ट हुनलाई १ राफ सर्फेस छ अरु २ रिब्समा भन्दा येस्को आन्टीरियेर येक्सटि मिटि लार्ज र थिक हुन्छ।

---

सेकेन्ड रिबको बयान।

फाष्ट रिब भन्दा यो लाङ्ग हुन्छ। येस्को आङ्गल थोरै कम्ती

हुन्छ। येस्को स्याफ्ट र होराईंजेन्टल छैन आउटर सर्फेस कन्भेक
हुन्छ। येस्को मिडिलमा सेरेटस म्याग्नस मासलको आटाचमे
हुनलाई १ राफ येमीनेन्स हुन्छ। येस्को बोहाईन्ड र आवभ
स्केलिनस पोष्टाइकस मासल आटाचमेन्ट हुन्छ। इन्नर सर्फे
स्मुथ र कन्केभ हुन्छ। येस्को पोष्टेरियर पार्टमा १ सर्ट ग्रुभ हुन्छ

रैन्थ रिबको बयान।

येस्को हेडमा १ सिङ्गल आर्टिक्युलर फ्यासेट हुन्छ।

११ येलेभेन्थ र १२ ट्वेल्थ रिब्सको हेडमा पनी उसै १ सि
ङ्गल आर्टिक्युलर फ्यासेट हुन्छ। तर टैन्थ भन्दा यो २ ल
हुन्छ। यो २ रिब्सको नेक र ट्युबेरोसिटि छैन। येस्को येक्स
ट्रिमीटि प्वाइन्टेट हुन्छ।

११ येलेभेन्थमा थोरै आङ्गल छ, येस्को लोवर वर्डर
१ स्माल ग्रुभ छ।

१२ ट्वेल्थमा यो २ पनी छैन। येलेभेन्थ भन्दा यो सर्ट हुन्छ

रिब्सको मासल्स।

१ इन्टर्नल इन्टरकष्टल्स।
२ येक्सटर्नल इन्टरकष्टल्स।
३ स्केलिनस आन्टाइकस।
४ स्केलिनस मिडिआस।
५ स्केलिनस पोष्टाईकस।
६ पेक्टोरयालिस माईनर।
७ सेरेटस म्याग्नस।

## नं ३० फार्ष्ट रिब सबभन्दा सान्, होरइजोन्टाल सार्फेस।



१। हेड। २। स्केलिनास मिडियास। ३। सावक्लु भियान आर्टरि लाइ ग्रुभ।
४। स्केलिनास एन्टाइकास। ५। सावक्लु भियन भेनलाई ग्रुभ। ६। सेरेटास म्यागनास को फार्ष्ट सेरेसान। ७। ट्या गगल छैना।



## नं ३१ सेकेन्ड रिब।



१। या गम। २। स्केलिनास पस्टिकास। ३। सेकेन्ड सेरेसान। ४। थार्ड सेरेसान

नं ३२ टेन्थ रिब।



१। सिंगल आर्टीकिउलार फासेट। २। टिउबार सिटि। ३। याँगल।

( १४८ क )

नं ३३ ईलेभन्त रिब।



१। सिंगल आर्टीकिउलार फासेट। २। याँगल। ३। टिउबारसिटि छैना।

( १४८ क )

नं ३४ टुयेल्भ्थ रिब।



१। सिंगल आर्टीकिउलार फासेट। २। याँगल छैना। ३। टिउबार सिटि छैना।

८ वोब्लीकस येक्सटर्नस।
९ काइरेटस लम्बोरम।
१० डायाफ्राम।
११ ल्याटिसिमास डर्साइ।
१२ सेरेटस पोष्टाइकस सुपीरियेर।
१३ सेरेटस पोष्टाइकस इन्फीरियेर।
१४ इलीयोकष्टेलिस।
१५ मासकुलास आक्सेस्सोरियाम्याड इलीयोकष्ट्यालेम।
१६ लङ्गीसिमास डर्साई।
१७ सभाइकेलिस आसन्डेन्स।
१८ लीभेटरिस कष्टेरस।
१९ इन्फ्राकष्टेलिस।

---

रिब्सको आर्टिकुलशन।

फाष्ट रिबदेखि सेभेन्थ रिबसम्म आन्टीरियेरमा कष्टलकार्टिलेज दीयेर ष्टार्नामको साथ वोहाईन्डमा डर्सल भार्टिब्रीको साथ आर्टिकुलेशन हुन्छ।

बाकी ५ मध्ये एट्थदेखि टेन्थसम्म अगाडी कष्टल कार्टिलेज पछाडी भार्टिब्रीको साथ मिल्छ। बाकी २ येलेभेन्थ र ट्वेल्थ अगाडी फ्री भै रहन्छ। पछाडी भार्टिब्रीको साथ मिल्छ।

---

क्ल्याभिकल
अथवा
कलार वोनको बयान।

यो लाङ्ग-वोन हो, फाष्ट रिबको आवभमा र थोरयाक्सको अपर आन्टीरियेर पार्टमा-होराईजेन्टल भै रहन्छ। येस्को इन्नर

येक्सट्रिमिटीको साथ ष्टर्नाम बोनको अपर वर्डरको साथ र येस्को आउटर येक्सटिमीटि स्क्यापुला बोनको आक्रोमियान प्रसेसको साथ आर्टिकुलेशन हुन्छ। येस्को फ्रान्ट हेर्दा ष्टर्नलयेन्डमा कन्भेक्स हुन्छ। स्क्यापुलारयेन्डमा कन्केभ हुन्छ। येस्को आउटरवर्ड आवभदेखि डाउनवार्डसम्म फ्ल्याट हुन्छ। येस्को इन्नर टु थार्डस सिलिन्ड्रीकल हुन्छ।

---

येक्सटर्नेल र फ्ल्याटेन्ड पोर्सनको वयान।

येस्को २ सर्फेसेस र २ वर्डर्स हुन्छन्। १ अपर सर्फेस। १ लोवर सर्फेस। १ आन्टीरियेर वर्डर। १ पोष्टीरियेर वर्डर।

अपर सर्फेस फ्ल्याट र राफ हुन्छ। फ्रान्टमा डेल्टयेड र बीहाईन्डमा टापिजियास मासल्स आटाचमेन्ट हुन्छ। येहि २मासल्सको बीचमा अलिकत्ती जगा सब कुटेनियास हुन्छ।

आन्डर सर्फेस फ्ल्याट हुन्छ। येस्को पोष्टीरियेर वर्डमा १ राफ येमिनेन्स हुन्छ। नाम कोनयेड ट्युवर्कल भन्छन। येसैमा कोनयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ। स्क्यापुलाको कोराकयेड प्रसेसको आवभमा रहन्छ। येही ट्युवर्कलबाट आन्टीरियेर वर्डरको आउटरयेन्ड सम्म १ वोब्लिक लाइन छ। यो फर्वार्ड र आउटवार्डदिग्मा जान्छ। नाम वोब्लिक लाइन, येसमा ट्रापिजयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ।

आन्टीरियेर वर्डर कन्केभ, थिन र राफ हुन्छ। येसमा डेल्टयेड मासल आटाचमेन्ट हुन्छ। येस्को इन्नर येन्डमा कोही२को १ ट्युवर्कल देखिन्छ, नाम डेल्टयेड ट्युवर्कल।

पोष्टीरियेर वर्डर कन्भेक्स र राफ हुन्छ। आन्टीरियेर भन्दा ब्रड हुन्छ। येसैमा ट्रापिजीयास मासल आटाचमेन्ट हुन्छ।

इन्टर्नल र सिलिन्डीकल पोर्सनको बयान।

यो सिलिन्डीकल पोर्सन येहि बोनको इन्नर टु थार्डसले बन्छ। येस्को फ्रान्ट कन्भेक्स बीहाईन्ड कन्केभ हुन्छ। येसमा ३ वर्डस, ३ सर्फेसेस हुन्छ र—

आन्टीरियेर वर्डर फ्ल्याट पोर्सनको आन्टीरियेर मार्जीनको साथ मील्छ, यो ठाउमा स्मुथ हुन्छ। पेक्टोरालिस मेजर र डेल्ट-येड मासल्सको आटाचमेन्टको बीचको ठाउँ हो।

सुपीरियेर वर्डर फ्ल्याट पोर्सनको पोष्टीरियेर मार्जीनको साथ मील्छ। येसले आन्टीरियेर र पोष्टीरियेर सर्फेसलाई सेपारेट गराउ छ। येस्को इन्नर थार्डमा ष्टर्नो क्लीडोम्याष्टयेड मासल आटा-चमेन्ट हुन्छ।

पोष्टीरियेर वर्डर दोस्रो नाम सावक्लेभियान वर्डर, येसले पोष्टीरियेर र इन्फीरियेर सर्फेसलाई सेपारेट गराउ छ। यो कोन-येड ट्युवर्कलदेखि रम्बयेड इम्प्रेसनसम्म हुन्छ। येसले सावक्लेभि-यास मासलको ग्रुभको पोष्टीरियेर वाउन्डरी बन्छ। येसैमा सर्भा-इकल फेसिया आटाचमेन्ट हुन्छ।

सुपीरियेर र आन्टीरियेर वर्डसको बीचमा आन्टीरियेर सर्फेस हुन्छ। येक्सटर्नलदिग्मा स्मुथ र कन्भेक्स हुन्छ। येसलाई फ्ल्याटिसमा मायोडिस मासलले काभार गर्छ। यो बोनको इन्नर

हाँफ १ प्रामीनेन्ट लाइनले २ पार्ट गराउछ। लोवर पोर्सन र
हुन्छ, येसमा पेक्टोरयालीस मेजर मासल आटाचमेन्ट हुन्
अपर पार्ट राफ हुन्छ, येसमा ष्टार्नोक्लीडोम्याष्टयेड मासल आ
चमेन्ट हुन्छ। यो २ मासलसको बीचमा १ स्माल ठाउँ छ,
ठाउँमा सावकुटेनीयास हुन्छ।

पोष्टेरियेर सर्फेस, दोस्रो नाम सर्भाइकल सर्फेस भन्छ
यो स्मुथ र प्ल्याट हुन्छ। येस्को आवभमा सुपीरियेर वर्डर, वीलो
सावक्लेभीयान वर्डर हुन्छ। इन्टर्नलदिग्मा ष्टार्नल येक्सट्रिमिटी
माजीन रहन्छ। येक्सटर्नलदिगमा फ्ल्याटपोर्सनको पोष्टीरि
वर्डरको साथ मील्छ। यो उइडिनदेखि आउटवार्ड सम्म कन्व
हुन्छ। येस्को येक्सटर्नल-येक्सट्रिमिटिको नजीकमा ष्टार्नोहा
मासलको १ पार्ट आटाचमेन्ट हुन्छ। मिडिलमा १ फोरामेन
येसबाट यो बोनको न्युट्रियान्ट आर्टरि जान्छ।

इन्फीरियेर सर्फेस, दोस्रो नाम सावक्लेभियान सर्फेस भन्छ
येस्को फ्रान्टमा आन्टीरियेर वर्डर बीहाइन्डमा सावक्लेभियान व
रहन्छ। यो इन्टर्नलदिग्मा न्यारो हुन्छ। येक्सटर्नलदिग वाइड
फ्ल्याटपोर्सनको अन्डर सर्फेसको साथ मील्छ।

ष्टार्नल येक्सट्रिमिटिमा फाष्ट रिबको कार्टिलेजको स
आर्टिकुलेशन हुनलाई कोडको १ स्माल फ्यासेट देखिन्छ, यो फ
सेट यो इन्टर्नलयेडको आर्टिकुलर सर्फेसको साथ मील्छ। येस
येक्सटर्नलदिग्मा १ ब्रड र राफ इम्प्रेसन रहन्छ। नाम रम्ब
इम्प्रेसन भन्छन, येसैमा कष्टोक्लाभीक्युलर लीगामेन्ट दोस्रो न
रम्बयेडलीगामेन्ट आटाचमेन्ट हुन्छ। यो सर्फेसको रीम्पनिड

टंमा १ लङ्गीच्युडिनल ग्रुभ हुन्छ। नाम, सावक्लेमियान ग्रुभ। येसैमा सावक्लेमियास मासल आटाचमेन्ट हुन्छ। येस्को आन्टीरियेर मार्जीनमा कष्टोकोस्याकयेड मेम्ब्रेन लाग्छ।

इन्टर्नल अथवा ष्टार्नेल येक्सट्रिमिटी भन्छन। यो ट्राइयाङ्गुलर हुन्छ। येसमा १ आर्टिक्युलर फ्यासेट छ। इन्टर आर्टिक्युलर, फाइब्रो कार्टिलेजले ष्टार्नामको साथ आर्टिकुलेशन हुन्छ। येस्को लोवर वर्डरमा फाष्ट रिवको कार्टिलेजको साथ आर्टिकुलेशन हुन्छ।

आउटर र आक्रोमियान येक्सट्रिमिटी, येसमा १ स्माल र फ्ल्याट वोभ्याल फ्यासेट छ। स्क्यापुलाको आक्रोमियान प्रसेसको साथ आर्टिकुलेशन हुन्छ। येस्को सार्कमफारेन्समा आक्रोमियो क्लाभिक्युलर लीगामेन्ट आटाचमेन्ट हुन्छ।

---

### क्लाभिकल-वोनको

आर्टिकुलेशन ३ वोन्स।

| | |
|---|---|
| ष्टार्नाम... ... ... | १ |
| स्क्यापुला ... ... ... | १ |
| कार्टिलेज आफ दी फाष्ट रिव | १ |

---

### क्लाभिकल वोनको

मासलस ६ हुन्छन।

१ ष्टार्नो क्लीडोम्याष्टयेड।

२ ट्रापिजियास।

३ पेक्टोरालिस मेजर ।
४ डेल्टयेड ।
५ सावक्लेभियास ।
६ ष्टार्नोहायेड ।

---

## स्क्यापुला बोनको वयान ।

येसले सोल्डर जयन्टको ब्याकपार्ट बन्छ। यो लार्ज, फ्ल्याट र ट्राइयाङ्गुलर हुन्छ। थोरयाक्सको पोष्टीरियेर साईडमा रहन्छ। सेकेन्डदेखि सेभेन्थ रिब्स सम्म र कोही २को एट्थ रिबको पनी माथी रहन्छ। येस्को २सर्फेसेस। ३ वर्डर्स। ३ आङ्गल्स हुन्छन।

---

### आन्टीरियेर सर्फेस

अथवा

भेन्टर सर्फेसको वयान ।

यो कन्केभ हुन्छ। नाम, साव स्क्यापुलार फसा। येसैमा वोब्लिक रिजेस छन। येसैमा साव स्क्यापुलेरिस मासल आटाच-मेन्ट हुन्छ। यो फसाको आन्टीरियेर थार्ड स्मुथ हुन्छ। येसलाई येही सावस्क्यापुलेरिस मासलले काभार गर्छ। यो भेन्टरको पोष्टीरियेर वर्डर स्मुथ हुन्छ। येस्को सुपीरियेर र इन्फीरियेर आङ्ग-लमा ट्राइयाङ्गुलर मार्जीन छ, येसैमा सेरेटसम्याग्नस मासल आटाच-मेन्ट हुन्छ। यो सावस्क्यापुलार फसाको अपर पार्टमा १ टयान्स-भर्स डीप्रेसन हुन्छ। नाम, सावस्क्यापुलार आङ्गल भन्छन।

---

## न ३५ लेफट क्लाभिक्ल सुपिरियर सार्फेस।



१। ग्याक्रोमियाल एकष्ट्रिमिटि। २। ष्टानाल एकष्ट्रिमिटि। ३। ष्टार्नो क्लाइडो ग्याष्टनड।

( १५१ क )

## न ३६ लेफ्ट क्लाभिक्ल इनफिरियर सार्फेस।



१। ष्टार्नाम की साथ जोड़ने। २। पेकटोरालिस मेजर। ३। रमायड लिगामेन्ट की इन्सर्सन।
४। ष्टार्नो हायड। ५। फार्ष्ट रिब की साथ जोड़ने। ६। सावक्लेभियास मासल की ग्रुभ।
७। कोनयड लिगामेन्टवाड टिउवाकल। ८। ट्रापिजयड लिगामेन्ट का रोच भिक लाइन।
[illegible]

नं २८ लेफ्ट स्क्यापिउला पोष्टिरियर सार्फेस वा डर्सम।




१। कोराकयेड प्रोसेस। २। बाइसेप्स। ३। कोराको ब्रेकियालिस। ४। नेक। ५ ट्रापिजयेड लिगामेण्टलाइन। ६ सुप्रास्क्यापिउलार नच। ७ सुप्रास्पाइनस फसा। ८ सुपिरियर ऐंगल। ९ लिभेटर ऐंगुलि स्क्यापिउलि। १० रमयड माइनर। ११ रमयडियास मेजर। १२ इनफिरियर ऐंगल। १३ टिरिस मेजर। १४ टिरिस माइनर। १५ स्क्यापिउला को ग्रीवा। १६ एक्रोमियन प्रोसेस। १७ स्पाइन। १८ ट्रापिजियास। १९ डेल्टयड। २० इनफ्रास्पाइनाटस फसा। २१ भर्टिब्राल बर्डर। २२ एक्सिलारि बर्डर।

## पोष्टीरियेर सर्फेसको

अथवा

डर्सील सर्फेसको बयान।

यो आवभदेखि डाउनवार्डसम्म आर्च हुन्छ। यो १स्पाइनले २भाग गराउ छ, स्पाइनको आवभपोर्सनको नाम सुप्रास्पाइन फसा भन्छन्। येस्को तल्लो भागको नाम इन्फ्रास्पाइन फसा भन्छन।

सुप्रस्पाइन फसा स्माल, कन्केभ र स्मुथ हुन्छ, येसमा सुप्रास्पिनेटस मासल आटाचमेन्ट हुन्छ।

इन्फ्रास्पाइन फसा सुप्रास्पाइन फसा भन्दा लार्ज हुन्छ। येस्मा इन्फ्रास्कीनेटस मासल आटाचमेन्ट हुन्छ। यो सर्फेस र आक्सिलरि वर्डरको बीचमा १ रिज हुन्छ। ग्लीनयेड क्याभिटिको लोवर पार्टदेखि पोष्टीरियेर वर्डरस डाउनवार्ड र व्याकवार्डदिग्मा जान्छन्। यो रिजले इन्फ्रास्कीनेटस र २ टेरिस माइनर, टेरिस मेजर मासलसलाई फराक गराउ छ, यो लाइन र आक्सिलरि वर्डरको ठाउं न्यारो हुन्छ। येस्को अपर टु थार्डसको सेन्टरमा १ ग्रुभ हुन्छ। येसवाट डर्सेलिस स्क्यापुलीभेसल्स हुन्छ। यो ठाउँमा टेरिसमाइनर मासल आटाचमेन्ट हुन्छ।

येस्को लोवर थार्ड वर्डर ट्राइयाङ्गुलर हुन्छ। येस्मा टेरिस मेजर् मासलको अरिजिन हुन्छ। येस्को माथी ल्याटिसिमास डर्साइ मासल ग्लाइड गर्छ, कोही२को यो मासलको फिउ फाइवर्स अरिजिन हुन्छ।

टेरिस माइनर र टेरिस मेजर मासलसको बीचमा १ ओब्लिक

नं ३८ लेफ्ट स्क्यापिउला पोष्टिरियर सार्फेस वा डर्सम ।



१। कोराकायेड प्रोसेस। २। वाइसेप्स। ३। कोराको ब्रेकियालिस। ४। नेक। ५ ट्रापिजयेड लिगामेन्टमार्क। ६ सुप्रास्क्यापिउलार नच। ७ सुप्रास्पाईनस फसा। ८ सुपिरियर ऐंगल। ९ लिभेटर एङ्गुलि स्क्यापिउलि। १० रम्बयड माइनर। ११ रम्बयिडस मेजर। १२ इनफिरियर ऐंगल। १३ टिरिस मेजर। १४ टिरिस माइनर। १५ स्क्यापुला को ऐंड। १६ एक्रोमियन प्रोसेस। १७ स्पाइन। १८ ट्रापिजियस। १९ डेल्टयड। २० ईनफ्रास्पाईनास फसा। २१ भर्टिब्राल बर्डर। २२ एक्सिलारि बर्डर।

## पोष्टीरियेर सर्फेसको

अथवा

डर्सीम सर्फेसको वयान ।

यो आवभदेखि डाउनवार्डसम्म आर्च हुन्छ। यो १स्पाइनले भाग गराउ छ, स्पाइनको आवभपोर्सनको नाम सुप्रास्पाइन फसा न्छन। येस्को तल्लो भागको नाम इन्फ्रास्पाइन फसा भन्छन ।

सुप्रस्पाइन फसा स्माल, कन्केभ र स्मुथ हुन्छ, येसमा सुप्रास्पिनेटस मासल आटाचमेन्ट हुन्छ।

इन्फ्रास्पाइन फसा सुप्रास्पाइन फसा भन्दा लार्ज हुन्छ। येस्मा इन्फ्रास्फीनेटस मासल आटाचमेन्ट हुन्छ। यो सर्फेस र आक्सिलरि वर्डरको बीचमा १ रिज हुन्छ। ग्लीनयेड क्याभिटिको लोवर पार्टदेखि पोष्टीरियेर वर्डरस डाउनवार्ड र व्याकवार्डदिस्मा जान्छन् । यो रिजले इन्फ्रास्फीनेटस र २ टेरिस माइनर, टेरिस मेजर मासलसलाई फराक गराउ छ, यो लाइन र आक्सिलरि वर्डरको ठाउँ न्यारो हुन्छ। येस्को अपर टु थार्डसको सेन्टरमा १ ग्रुभ हुन्छ। येसवाट डर्सेलिस स्क्यापुलीभेसल्स हुन्छ। यो ठाउँमा टेरिसमाइनर मासल आटाचमेन्ट हुन्छ।

येस्को लोवर थार्ड वर्डर ट्राइयाङ्गुलर हुन्छ। येस्मा टेरिस मेजर मासलको अरिजिन हुन्छ। येस्को माथी ल्याटि[illegible] डर्साइ मासल ग्लाइड गर्छ, कोही२को यो मासलको [illegible] वर्स अरिजिन हुन्छ।

टेरिस माइनर र टेरिस मेजर मासल्सको

आङ्गलमा टार्मीनेन्ट हुन्छ । आउटर येक्सट्रिमिटी कोस्याकयेड प्रसेसमा टार्मीनेन्ट हुन्छ ।

येस्को आउटर पार्टमा १ डीपसेमि सार्कुलर नच रहन्छ। नाम सुप्रास्क्यापुलार नच भन्छन, यो नचको साथ ट्यान्सभर्स लीगामेन्ट मिलि १ फोरामेन बन्छ। येसबाट सुप्रास्क्यापुलार नार्भ जान्छ। येही नचको सुपीरियेर बर्डरमा ओमोहायेड मासल आटाचमेन्ट हुन्छ।

येस्को येक्सटर्नेल वर्डरको दोस्रो नाम आक्सिलरि बर्डर भन्छन, यो थिक हुन्छ। यो ग्लीनयेड क्याभिटिको लोवर मार्जीनदेखि इन्फीरियेर आङ्गलसम्म जान्छ।

ग्लीनयेड क्याभिटिको बीलोमा १ राफ इम्प्रेसन हुन्छ। नाम इन्फ्रा ग्लीनयेड ट्युवर्कल भन्छन, येसैमा ट्राइसेप्स मासलको लाङ्ग हेड आटाचमेन्ट हुन्छ। येस्को बीलोमा १ लङ्गीच्युडिनल ग्रुभ हुन्छ येसैमा साव स्क्यापुलेरिस मासलको १पार्ट अरिजिन हुन्छ। यो बर्डरको इन्फीरियेर थार्डको बीहाईन्डमा टेरिस मेजर मासलको थोरै फाइवर्स फ्रान्टमा सावस्क्यापुलेरिस मासलको थोरै फाइवर्स आटाचमेन्ट हुन्छ।

इन्टर्नेल बर्डरको दोस्रो नाम भार्टिब्रल बर्डर पनीभन्छन, कोही२ले येसलाई वेस पनी भन्छन, यो अरु ३ बर्डर्स भन्दा लाङ्ग हुन्छ। सुपीरियेर आङ्गलदेखि इन्फीरियेर आङ्गलसम्म, येक्सटेन्ड गर्छ, यो आर्च हुन्छ। यो बर्डरमा १आन्टोरियेर लीप, १पोष्टीरियेर लीप र १इन्टर मिडियेट येस्पेस रहन्छ।

आन्टीरियेर लीपमा सेरेटस म्याग्नस मासल आटाचमेन्ट हुन्छ। पोष्टीरियेर लीपको आवभमा सुप्रास्पीनेटस मासल, वीलोमा इन्फ्रास्पीनेटस मासल आटाचमेन्ट हुन्छ। यो २ लीप्सको वीचको ठाउँको आवभमा लीभेटर आङ्गुलीस्क्यापुली मासल, वीलोमा रम्वयेडियास माइनर मासल, येस्को पनी वीलोमा रम्वयेडियास मेजर मासल आटाचमेन्ट हुन्छ।

---

### स्क्यापुला बोनको
३ आङ्गलसको बयान।

सुपीरियेर आङ्गल, येस्मा लीभेटर आङ्गुलीस्क्यापुली मासलको थोरै फाइवर्स आटाचमेन्ट हुन्छ।

इन्फीरियेर आङ्गल, थिक राफ हुन्छ। येसैको आउटर सर्फेसमा टेरिसमेजर मासल आटाचमेन्ट हुन्छ, कोही २ को ल्याटिसिमास डर्साइको थोरै फाइवर्स आटाचमेन्ट हुन्छ।

आन्टीरियेर आङ्गल, थिक हुन्छ, येसलाई हेड आफ दी स्क्यापुला भन्छन, येहि हेडमा १ स्यालो आर्टिकुलर सर्फेस हुन्छ। नाम ग्लीनयेड क्याभिटि भन्छन, यो आउर्वार्ड र फर्वार्ड दिग्मा जान्छ, यो आवभ भन्दा वीलोमा ब्रड हुन्छ। येस्को य्येपेस्समा १ ट्युवर्कल छ। नाम सुप्राग्लीनयेड ट्युवर्कल भन्छन, येसैमा बाईसेप्स मासलको लाङ्ग टेन्डन आटाचमेन्ट हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्ह, येस्को मार्जीनमा ग्लीनयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ।

हेडको चारै दिग्मा डीप्रेष्ट सर्फेस हुन्छ। नाम नेक आफ दी

स्क्यापुला भन्छन, येहि ठाउँबाट कोरयाकयेड प्रसेस उठ छ।

---

## कोर्‌याकयेड प्रसेसको वयान।

स्क्यापुला बोनको नेकको अपर पार्ट १ थिक कार्भ प्रसेस आफ बोन उठ छ। नाम कोस्याकयेड प्रसेस भन्छन। यो पैहे अपवार्ड र इनवार्डदिग्मा जान्छ फेरि फर्वार्ड र आउटवार्डदिग्मा जा छ येस्को असिन्डिङपोर्सन बीफोरदेखि ब्याकवार्ड फ्ल्याट हुन्छ येस्को फ्रान्टमा १ स्मुथ कन्केभ सर्फेस छ, येसैमा साबस्क्यापुलेरिस मासल रहन्छ।

येस्को होराजेन्टलपोर्सन आवभदेखि डाउनवार्डस फ्ल्याट हुन्छ। येस्को अपर सर्फेस इरेगुलर र कन्भेक्स हुन्छ। येसैमा पेक्टोरयालिस माइनर मासल आटाचमेन्ट हुन्छ। येस्को आन्डर सर्फेस स्मुथ हुन्छ। इन्नर वर्डर राफ हुन्छ। येसैमा पनी पेक्टोरयालिस माइनर मासल आटाचमेन्ट हुन्छ। आउटर वर्डर राफ हुन्छ। येसा कोरयाकको आक्रोमील लीगामेन्ट आटाचमेन्ट हुन्छ येस्को येपेक्समा सट हेड आफ दी बाइसेप्स र कोरयाकको ब्रेकीयालिस मासलको टेन्डन अरिजिन हुन्छ।

कोरयाकयेड प्रसेसको रुडको इन्नर साइडमा १ राफ इम्प्रेसन हुन्छ। नाम,| कोनयेड ट्युवर्कल। येसैमा कोनयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ।

होराईजेन्टलपोर्सनको अपर सर्फेसमा १ रिज छ, येसैमा ट्रापिजयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ।

## स्क्यापुला बोनको

आर्टिकुलेशन २ हुन्छन ।

क्लाभिकल बोन १

ह्युमेरस बोन १

---

## स्क्यापुला बोनको

मासल्स १७ हुन्छन ।

आन्टीरियेरदिग्मा १

सावस्क्यापुलेरिस ।

पोष्टीरियेरदिग्मा १६

सुप्रास्पीनेटस ।

इन्फ्रास्फोनेटस ।

ट्रापिजियास ।

डेल्टयेड ।

ओमोहायेड ।

सेरेटस म्याग्नस ।

लीभेटर आङ्गुलोस्क्यापुली ।

रम्बयेडियास माइनर ।

रम्बयेडियास मेजर ।

ट्राइसेप्स ।

टेरिस माइनर ।

टेरिस मेजर ।

वाइसेप्स ।

कोस्राकोब्रेकियालिस ।

पेक्टोस्यालिस माइनर।
ल्याटिसिमास डर्साई मासल। कसैको छ, कसैको छैन।

---

हयुमेरस बोनको बयान।

अपर येक्सट्रिमिटीको अरु बोन्स भन्दा यो लाङ्ग र लार्ज हुन्छ, येस्को १ स्याफ्ट। २ येक्सट्रिमिटीज हुन्छ।

---

अपर येक्सट्रिमिटीजको बयान।

यो राउन्ड हुन्छ। येस्लाई हेड आफ दी ह्युमेरस भन्छन। हेड र स्याफ्ट जाहाँ मिल्छ उहि ठाउँमा कन्सटिक्टेड हुन्छ। नाम नेक भन्छन, येसैमा अरु २ येमिनेन्सेस छ। नाम पहिला ग्रेट ट्युबेरोसिटि। दोस्रो लेसर ट्युबेरोसिटि भन्छन।

---

हेडको बयान।

यो हेड हेमिस फेरिकल हुन्छ। यो अपवार्ड, इनवार्ड र थोरै ब्याकवार्डदिश्मा जान्छ। येसैको साथ स्क्यापुला बोनको ग्लीनयेड क्याभिटिको साथ आर्टिकुलेशन हुन्छ, येस्को सर्फेस स्मुथ हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्छ, येस्को आर्टिकुलर सर्फेसको सार्कमफारेन्स थोरै कन्सटिक्टेड हुन्छ। नाम येनाटमीकेल नेक भन्छन। ट्युबेरोसिटिजको बीलोमा जो नेक रहन्छ। नाम साजींकेल नेक, येसै ठाउँमा जादा फ्ल्याकचर हुन्छ।

---

## येनाटमीकेल नेकको बयान ।

हेड र ट्युवेरोसिटिको बीचमा न्यारो ग्रुभ छ, येसैलाई येनाटमीकेल नेक भन्छन, येसैमा क्यापसुलर लीगामेन्ट आटाचमेन्ट हुन्छ, येसै ठाउँमा धेरै भ्यास्कुलर फोरामीना हुन्छ ।

### ग्रेट ट्युवेरोसिटिको बयान ।

यो हेड र लेसरट्युवेरोसिटिको आउटर साइडमा रहन्छ । येस्को अपर सर्फेस राउन्ड हुन्छ, उसैमा ३ फ्यासेट रहन्छ । येस्को सुपीरियेर फ्यासेटमा सुप्रास्पीनेटसको टेन्डन आटाचमेन्ट हुन्छ । मिडिल फ्यासेटमा इन्फ्रास्पीनेटस मासलको टेन्डन आटाचमेन्ट हुन्छ । इन्फीरियेर फ्यासेट र येस्को वीलोमा टेरिस माइनर मासलको टेन्डन आटाचमेन्ट हुन्छ ।

ग्रेट ट्युवेरोसिटिको आउटर सर्फेस कन्भेक्स र राफ हुन्छ । स्याफ्टको आउटर साईडको साथ मिल्छ ।

लेसर ट्युवेरोसिटि, ग्रेट ट्युवेरोसिटि भन्दा स्माल र प्रामीनेन्ट हुन्छ । हेडको फ्रान्टमा रहन्छ । यो इनवार्ड र फर्वार्डदिग्मा जान्छ, येसैमा १ फ्यासेट हुन्छ, येसैमा साबस्क्यापुलेरिस मासलको टेन्डनको इन्सर्सन हुन्छ, यो २ ट्युवेरोसिटिजको बीचमा १ डीप ग्रुभ छ । नाम वाइसिपिटल ग्रुभ भन्छन, येसैमा वाइसेप्स मासलको लाङ्ग टेन्डन र आन्टीरियेर सार्कम फ्लेक्स आर्टरिको १ ब्रेञ्च जान्छ । यो ग्रुभको २ वर्डसलाई नाम आन्टीरियेर वाइसिपिटल

रिज र पोष्टीरियेर वाइसिपिटल रिज भन्छन। ताजा भयामा कार्टिलेज रहन्छ। येसैमा ल्याटिसिमास डर्साई मासलको टेन्डन इन्सरसन हुन्छ।

---

स्याफ्टको बयान।

येस्को अपर हाप सिलिन्डीकल हुन्छ। वीलोमा फ्ल्याट हुन्छ। येस्को ३ वर्डर्स। ३ सर्फेसेस हुन्छन्।

---

आन्टीरियेर वर्डरको बयान।

आवभमा ग्रेट ट्युवेरोसिटिको फ्रान्ट देखि वीलोमा करुनयेड प्रसेससम्म जान्छ। येस्ले इन्टर्नल र येक्सटर्नल सर्फेसलाई सेपारेट गराउ छ, येस्को अपर पार्टमा आन्टीरियेर वाइसिपिटल रिज रहन्छ। येसैमा पेक्टोस्यालिस मैजरको टेन्डन आटाचमेन्ट हुन्छ। यो वर्डरको सेन्टरमा डेल्टयेड इम्प्रेसनको आन्टीरियेर वाउन्डरी वन्छ। वीलोमा स्मुथ र राउन्ड हुन्छ। येसैमा ब्रेकियालिस आन्टाइकस मासल आटाचमेन्ट हुन्छ।

---

येक्सटर्नल वर्डरको बयान।

यो ग्रेट र ट्युवेरोसिटिको व्याकपार्टदेखि येक्सटर्नल कन्डाइलसम्म जान्छ। येस्ले येक्सटर्नल र पोष्टीरियेर सर्फेसलाई सेपारेट गराउ छ। येस्को अपर हापमा पेरिस माइनर मासलको लोवरपार्ट इन्सर्सन हुन्छ। येस्को वीलोमा ट्राइसेप्स मासलको येक्सटर्नल हेड आटाचमेन्ट हुन्छ। यो वर्डरको सेन्टरमा १ब्रड स्वालो

न १७ लेफ्ट स्क्यापिउला एण्टिरियर सार्फेस।



१ क्लाभिकल को साथ जोडने। २। बाइसेप्सर कोराको ब्रेकियालिस। ३। पेक्टोरालिस माइनर। ४। ग्लिनयड क्याभिटि। ५। ट्राईसेप्स। ६। सेरेटास म्याग्नास। ७। साबस्क्यापिउलार फसा। ८। कोनयड लिगामेण्ट सार। ९। ट्रापिजयड लिगामेण्ट सार।

## नं ३८ लेफ्ट ह्यिउमारास य्यािण्टरियर ।




१ हेड। २ य्यानाटमिकाल नेक। ३ साब स्काप्युलारिस लाइ ने सार टिउबार सिटि। ४ सुप्रास्पाइनैटास। ५ ग्रेटार टिउबार सिटि। ६ य्यािण्टरियर बाइसिपिटाल रिज। ७ बाइसिपिटाल ग्रुभ। ८ पोष्टिरियर बाइसिपिटाल रिज। ९ ल्याटिसिमास डर्साइ। १० पेकटोरालिस मेजर ११ टिरिस मेजर। १२ डेलटयेड। १३ कोराको ब्रेकियालिस। १४ ब्रेकियालिस य्याण्टाइ कास। १५ सुपाइनेटर रेडियाइ लङ्गास। १६ एकस टेनसर कार्पि रेडियालिस लङ्गियर। १७ एक्स्टार्नाल काण्डाईल। १८ रेडियाल हेड। १९ ट्रकलिया आलनाके साथ। २० रेडियाल डिप्रेसन। २१ करोनयड डिप्रेसन। २२ इण्टार्नाल काण्डाइल। २३ प्रोनेटार रेडियाइ टिरिस।

वोब्लिक डीप्रेसन हुन्छ। नाम मासकुलीस्पाइरल्ग्रुभ भन्छन। येस्को लोवर पार्टमा १ प्रामीनेन्ट राफ़ मार्जीन हुन्छ। नाम येक्सटर्नल कन्डीलयेट रिज भन्छन। येस्को आन्टीरियेर लीपको आवभमा सुपीनेटर लाङ्गस मासल र वीलोमा येक्सटेन्सर कार्पाई रेडिया-लिस लाङ्गीअर मासल आटाचमेन्ट हुन्छ। येस्को पोष्टीरियेर लीपमा ट्राइसेप्स मासल आटाचमेन्ट हुन्छ।

---

इन्टर्नल वर्डरको बयान।

यो लेसर ट्युबेरोसिटिदेखि इन्टर्नल कन्डाईलसम्म जान्छ। येस्को अपर थार्डमा १ प्रामिनेन्ट रिज हुन्छ। नाम पोष्टीरियेर वाइसिपिटल रिज भन्छन। येसैमा टेरिस मेजर मासलको टेन्डन आटाचमेन्ट हुन्छ। येस्को सेन्टरमा १ राफ रिज हुन्छ। येसैमा कोरकाको ब्रेकीयालिस मासल आटाचमेन्ट हुन्छ। येस्को वीलोमा न्युटियान्ट केनाल रहन्छ। यो वर्डरको इन्फीरियेर थार्डमा १ रिज छ। नाम इन्टर्नल कन्डीलयेट रिज भन्छन्। येस्को आन्टीरियेर ली-पमा ब्रेकीयालिस आन्टाइकस मासल आटाचमेन्ट हुन्छ। पोष्टीरियेर लीपमा ट्राइसेप्स मासलको इन्टर्नल हेड आटाचमेन्ट हुन्छ।

---

येक्सटर्नल सर्फेसको बयान।

येस्को आवभ आउटवार्डदिग्मा जान्छ। येसलाई डेल्टयेड मासलले काभार गर्छ। वीलो फर्वार्ड र आउटवार्डदिग्मा जान्छ। येसैमा ब्रेकीयालिस आन्टाइकस मासलको १ पार्ट अरिजिन हुन्छ। यो सर्फेसको मिडिलमा १ राफ ट्राईयाङ्गुलर इम्प्रेसन हुन्छ। येसैमा डेल्टयेड मासल इन्सरसन हुन्छ। येस्को तल मास्कुलो स्पाइरल

ग्रुभ हुन्छ। यो वोब्लिक भै वीहाईन्डदेखि फर्वार्ड र डाउनवार्डदिग्मा जान्छ, येस्वाट मास्कुलो स्पाइरल नार्भ र सुपीरियेर प्रोफन्डा आर्टरि जान्छ।

---

इन्टर्नल सर्फेसको वयान।

येस्को आवभ इनवार्डदिग्मा जान्छ। वीलो फर्वार्ड र इनवार्डदिग्मा जान्छ। येस्को अपर पार्ट न्यारो हुन्छ। वाइसिपिटल ग्रुभको फ्लोर वन्छ। येसैमा ल्याटिसीमास डर्साई मासल आटाचमेन्ट हुन्छ। यो सर्फेसको मिडिल पार्टमा कोस्याको व्रेकियालीस मासलको टेन्डनको थोरै फाइवर्स इन्सरसन हुन्छ। येस्को लोवर पार्टमा व्रेकियालीस आन्टाइकस मासल आटाचमेन्ट हुन्छ।

---

पोष्टीरियेर सर्फेसको वयान।

येस्को अपर पार्ट थोरै इनवार्डदिग्मा जान्छ। लोवर पार्ट व्याकवार्डदिग्मा जान्छ। यो सर्फेसमा ट्राइसेप्स मासलको येक्सटर्नल र इन्टर्नल हेड्सले काभार गर्छ, यो येक्सटर्नल हेड अपर र आउटर पार्टमा रहन्छ। इन्टर्नल हेड इन्नर र व्याकपार्टमा रहन्छ। यो २को वीचमा मास्कुलो स्पाइरल ग्रुभ रहन्छ।

---

हुमेरस वोनको

लोवर येक्सट्रिमीटीको वयान।

यो वीफोरदेखि व्याकवार्डस फ्ल्याट हुन्छ। फर्वार्डमा थोरै कार्भ्ड हुन्छ। येसैमा १ व्रड आर्टिकुलर सर्फेस हुन्छ। १ रिजले

येसलाई २ भाग गराउ छ, येस्को २ दिग्मा येक्सटर्नल कन्डाइल र इन्टर्नल कन्डाइल प्रोजेक्ट गर्छन। यो आर्टिकुलर सर्फेसको आउटर दिग्मा १स्मुथ राउन्ड येमिनेन्स हुन्छ। नाम क्यापिटिलाम दोस्रो नाम रेडियाल हेड आफ दी ह्युमेरस भन्छन। रेडियासको हेडमा जो डीप्रेसन छ, उसैको साथ यो रेडियाल हेड आफ दी ह्युमेरसको साथ आर्टिकुलेशन हुन्छ। यो येमिनेन्सको इन्नर साइडमा १स्यालो ग्रुभ छ, येसैको साथ रेड़ियासको हेडको इन्नर मार्जीनको साथ आर्टिकुलेशन हुन्छ। यो क्यापिटिलासको फ्रान्ट पार्टको आवभमा १डीप्रेसन छ। फोर आरम फ्लेक्सन गर्ने बेलामा मात्र रेडियासको हेडको आन्टीरियेर वर्डरको साथ आर्टिकुलेशन हुन्छ।

आर्टिकुलर सर्फेसको इन्नरपोर्सनको दोस्रो नाम ट्रक्लिआर भन्छन। २ वर्डर्सको वीचमा १डीप्रेसन छ, यो सर्फेस वीफोरदेखि व्याकवार्डस कन्भेक्स हुन्छ। साईड टु साईड कन्केभ हुन्छ। येस्को येक्सटर्नल वर्डर, इन्टर्नल वर्डर भन्दा थोरै प्रामिनेन्ट हुन्छ। रेडिआस र आलना जाहाँ फराक रहन्छ, यो ठाउँ उही हो। येस्को इन्टर्नल वर्डर थिक र प्रामिनेन्ट हुन्छ। यो आर्टिकुलर सर्फेसमा जो ग्रुभ छ, उसैको साथ आलना वोनको ग्रेटर सिगमाइड क्याभिटिको साथ आर्टिकुलेशन हुन्छ। यो आन्टीरियेर भन्दा पोष्टीरियेरदिग्मा व्रड र डीप हुन्छ। यो ट्रक्लिआर सर्फेसको फ्रान्ट पार्टको आवभमा १स्याल डीप्रेसन छ। नाम करुनयेड फसा भन्छन। फोर आरमको फ्लेक्सन गर्ने बेलामा आलनाको करुनयेड प्रसेसको साथ लाग्छ। यो ट्रक्लिआर सर्फेसको व्याकपार्टको आवभमा १डीप टाइंयाङ्गुलर डीप्रेसन छ। नाम अलिक्रेनन फसा

भन्छन। फोर आरमको येक्सटेन्सन गर्ने वेलामा अलिक्रेन प्रससको समीटमा लाग्छ। यो २फासिलाई १थिन लामीना आफ बोनले सेपारेट गराउ छ। कोही२को यो ठाउँमा पारफोरेट हुन्छ। यो प्वाल रहे छ भने येस्लाई सुप्राट्रक्लिआर फोरामे भन्छ। यो २फासिको अपर मार्जीनमा येलबोजयेन्टको आन्टीरि येर र पोष्टीरियेर लीगामेन्टस आटाचमेन्ट हुन्छ। ताजा भयाम यो ठाउँमा साइनोभियाल मेम्ब्रेन रहन्छ। यो आर्टिकुलर सर्फेस ताजा भया कार्टिलेज देखिन्छ।

येक्सटर्नल कन्डाइल्स स्माल हुन्छ। येसैमा येलबोजयेन्टको येक्सटर्नल ल्याटारुयाल लीगामेन्ट आटाचमेन्ट हुन्छ। येसैमा येक्सटेन्सर र सुपीनेटर मासल्सको टेन्डन अरिजिन हुन्छ।

इन्टर्नल कन्डाइल लार्ज हुन्छ। येसैमा इन्टर्नल ल्याटारुयाल लीगामेन्ट र प्रोनेटर रेडिआई टेरिस मासल आटाचमेन्ट हुन्छ र फोर आरमको फ्लेक्सर मासल्सको टेन्डन अरिजिन हुन्छ। इन्टर्नल कन्डाइलको ब्याकपार्टमा र अलिक्रेनन प्रसेस र इन्टर्नल कन्डाइलको वीचमा १ग्रुभ छ, येसैबाट आल्ना र नार्भ जान्छ।

---

हुमेरस बोनको

आर्टिकुलेशन ३ बोन्स।

| | |
|---|---|
| ग्लीनयेड क्याभिटी आफ दी स्क्यापुला | १ |
| रेडिआस बोन ... ... | १ |
| आल्ना बोन ... ... ... | १ |

---

## ह्युमेरस बोनको

मासल्स २४ हुन्छन।

प्रेटर ट्युबेरोसिटिमा ३—

१ सुप्रास्फिनेटस।

२ इन्फ्रास्फिनेटस।

३ टेरिस माइनर।

पोष्टीरियेर वाइसीपिटल रिजमा १—

४ टेरिस मेजर।

लेसर ट्युबेरोसिटिमा १—

५ सावस्क्यापुलेरिस।

आन्टीरियेर वाइसीपिटल रिजमा १—

६ पेक्टोस्यालिस मेजर।

वाइसीपिटल ग्रुभमा १—

७ ल्याटिसिमास डर्साई।

स्याफ्टमा ४—

८ डेल्टयेड।

९ कोस्राको ब्रेकियालिस।

१० ब्रेकियालिस आन्टाइकस।

११ ट्राइसेप्स।

इन्टर्नलकान्डाइलमा ५—

१२ प्रोनेटर रेडिआई टेरिस।

१३ फ्लेक्सरकार्पाइ रेडियालिस।

१४ पामेरिस लाङ्गस।

१५ फ्लेक्सरसाब्लिमीस डिजिटोरम।

१६ फ्लेक्सरकार्पाइ आल्नेरिस ।

येक्सटर्नल कन्डीलयेट रिजमा २–

१७ सुपीनेटर लाङ्गस ।

१८ येक्सटेन्सरकार्पाइ रेडियालीस लाङ्गिअर ।

येक्सटर्नलकन्डाइलमा ५–

१९ येक्सटेन्सरकार्पाइ रेडियालीस ब्रीभिअर ।

२० येक्सटेन्सर कम्युनिस डिजिटोरम ।

२१ येक्सटेन्सर मीनिमाइडीजिटाई ।

२२ येक्सटेन्सरकार्पाइ आलनेरिस ।

२३ सुपीनेटर ब्रीभिस ।

येक्सटर्नलकन्डाइलको ब्याकमा १–

२४ यानकोनीयास ।

---

## आल्ना बोनको बयान

यो फोर आरमको इन्नर साइडमा रेडिआसको साथ २ रहन्छ यो रेडिआस भन्दा लार्ज र लाङ्ग हुन्छ। येस्को अपर येक्सटि मिटी थिक र ष्टाङ्ग हुन्छ । येस्ले येलबोजयेन्ट बनाउने का दिन्छ। येस्को १स्याफ्ट । २येक्सट्रिमीटिज हुन्छ।

---

अपर येक्सट्रिमिटीको बयान ।

यो ष्ट्राङ्ग हुन्छ, येसैमा २ लार्ज कार्भ्ड प्रसेसेस हुन्छ। ना अलिक्रेनन प्रसेस १। करुनयेड प्रसेस १।

येसैमा २ कन्केभ आर्टिकुलर क्याभिटिज हुन्छ। नाम ग्रेट सिगमाईड क्याभिटी १। लेसर सिगमाईड क्याभिटी १।

## अलिक्रेनन प्रसेसको बयान।

यो लार्ज थिक कार्भ येमिनेन्स हुन्छ। आल्ना बोनको अपर र ब्याकप्रार्टमा रहन्छ। येस्को फर्वार्डमा कार्भ्ड हुन्छ। अलिक्रेनन प्रसेसको पोष्टीरियेर सर्फेस ब्याक्वार्डदिग्मा जान्छ। यो ट्राइयाङ्गलर स्मुथ र साबकुटेनियास हुन्छ। येस्को अपर सर्फेस अपवार्डदिग्मा जान्छ। येस्को बीहाईन्डमा १ राफ इम्प्रेसन छ, येसैमा ट्राईसेप्स मासल आटाचमेन्ट हुन्छ। येस्को फ्रान्टमा १ट्यान्सभर्स ग्रुभ छ, येसैमा येलबोजयेन्टको पोष्टीरियेर लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को आन्टीरियेर सर्फेस स्मुथ र कन्केभ हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्छ, येसले ग्रेट सिगमाइड क्याभिटीको अपर ब्याकपार्ट बन्छ। येस्को ल्याटास्याल बर्डर्समा १ ग्रेभ छ, येसैमा लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को इन्नर बर्डरमा फ्लेक्सरकार्पाई आल्नेरिस मासलको १ पार्ट आटाचमेन्ट हुन्छ। आउटर बर्डरमा यानकोनियास मासल आटाचमेन्ट हुन्छ।

### करनयेड प्रसेसको बयान।

आल्नाको अपर र फ्रान्टमा राफ र ट्राइयाङ्गुलर येमिनेन्स हुन्छ। यो होराईजेन्टल भै फर्वार्डदिग्मा प्रोजेक्ट गर्छ, येसले ग्रेट सिगमाईड क्याभिटीको लोवर पार्ट बन्छ। येस्को बेस स्याफ्टको साथ मिल्छ, येस्को येपेक्स प्वाइन्टेट हुन्छ। फोर आरमको

फ्लेक्सन गर्ने वेलामा ह्युमेरसको करुनयेड डीप्रेसनमा लाग्छ, येस्को अपर सर्फेस स्मुथ र कन्केभ हुन्छ। येसैले ग्रेट सिगमाइड क्याभिटीको लोवर पार्ट बन्छ, येस्को आन्डर सर्फेस कन्केभ हुन्छ। येस्को इन्नरदिग्मा १ राफ इम्प्रेसन छ, येसैमा ब्रेकियालिस आन्टाइकस मासल इन्सरसन हुन्छ। यो सर्फेस र स्याफ्ट जाहाँ मिल्छ, तेसै ठाउँमा १ राफ येमिनेन्स छ। नाम ट्युबर्कल आफ दी आल्ना येसैमा वोब्लिक लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को आउटर सर्फेसमा १ न्यारो अब्लोङ आर्टिकुलर डीप्रेसन छ। नाम लेसर सिगमाइड क्याभिटी भन्छन। येस्को इन्नर सर्फेसमा १ मार्जीन छ, उसैमा इन्टर्नल ल्याटारुयाल लीगामेन्टको १ पार्ट आटाचमेन्ट हुन्छ। येहि सर्फेसको फ्रान्ट पार्टमा १ स्माल राउन्डयेमिनेन्स छ, येसैमा फ्लेक्सर साब्लीमिस डिजीटोरम मासलको १ हेड आटाचमेन्ट हुन्छ। येहि येमिनेन्सको बीहाईन्डमा १ डीप्रेसन छ, उसैमा फ्लेक्सर प्रोफन्डस डिजिटोरमको १ पार्ट अरिजिन हुन्छ। येहि येमिनेन्सको तल्लोदिग्मा १ रिज हुन्छ, तेसैमा प्रोनेटर रेडियाईटेरिस मासलको १ हेड आटाचमेन्ट हुन्छ। करुनयेड प्रसेसको लोवर पार्टमा फ्लेक्सर लाङ्गस पलीसिस मासल उठ छ।

---

ग्रेटर सिगमाइड क्याभिटीको बयान।

यो १ लार्ज सेमिलुनर डीप्रेसन छ, यो अलिक्रेनन प्रसेस र करुनयेड प्रसेसले बन्छ। येसैको साथ ह्युमेरस बोनको ट्रक्लीआर सर्फेसको साथ आर्टिकुलेशन हुन्छ। येस्को ल्याटारुयाल वर्डरको मिडिलमा १ नच छ। यो क्याभिटि आवभंदेखि डाउनवार्डस

कन्केभ हुन्छ । १ रिजले येसलाईं डिभाइड गर्छ, येस्को इन्टर्नल पोर्सन लार्ज हुन्छ । ट्र्यान्सभर्सदिग्मा थोरै कन्केभ हुन्छ । येक्सटर्नलपोर्सनको आवभ कन्भेक्स हुन्छ । बीलोमा थोरै कन्केभ हुन्छ ।

---

###### लेसर सिगमाइड क्याभिटीको बयान ।

यो करुनयेड प्रसेसको आउटर साईडमा १ न्यारो आर्टिकुलर डीप्रेसन छ । रेडियासको हेडको साथ आर्टिकुलेशन हुन्छ । ो बीफोरदेखि व्याकवार्डस कन्केभ हुन्छ । येस्को येक्सट्रिमिटीमा ार्बिकयुलर लीगामेन्ट आटाचमेन्ट हुन्छ ।

---

###### स्याफटको बयान ।

येस्को अपर पार्टको आकार प्रिजमेटिक हुन्छ । बीहाईन्ड- ेखि फर्वार्ड काभ्र्ड हुन्छ । उड्ड डाउटदेखि इनवार्ड पनी काभ्र्ड हुन्छ । येक्सटर्नल र बीहाईन्ड कन्भेक्स हुन्छ । येस्को सेन्टर पार्ट ाउन्ड स्मुथ हुन्छ । आउटवार्डदिग्मा थोरै काभ्र्ड हुन्छ । आवभ- ेखि डाउनवार्ड सानु र हुदै जान्छ । येस्को ३ वर्डर्स । ३ सर्फेसेस हुन्छन् ।

---

###### आन्टीरियेर वर्डरको बयान ।

आवभमा करुनयेड प्रसेसको इन्नर आङ्गलदेखि बीलोमा स्टाइलयेड प्रसेसको फ्रान्टसम्म टार्मिनेट हुन्छ । यो वर्डर आवभमा राम्रो संग देखिन्छ, येस्को मिडिल स्मुथ र राउन्ड हुन्छ । येसैमा फ्लेक्सर प्रोफन्डस डिजिटोरम मासल आटाचमेन्ट हुन्छ । येस्को

लोवर फोर्थको आन्टोरियेर सर्फेसमा १ वोब्लिक रिज हुन्छ। येसैमा प्रोनेटर क्वाडरेटस मासल आटाचमेन्ट हुन्छ। येसले आन्टीरियेर र इन्टर्नेल सर्फेसलाई सेपारेट गराउ छ।

---

पोष्टीरियेर वर्डरको बयान।

आवभमा अलिक्रेनन प्रसेसको व्याकपार्टमा, जो ट्राईयाङ्गुलर साबकुटेनियास सर्फेस हुन्छ। येसैको येपेक्सदेखि बीलोमा ष्टाइलयेड प्रसेसको व्याकपार्टसम्म यो वर्डर टार्विनेट हुन्छ। यो वर्डरको अपर थ्री, फोर्थ राम्रो संग देखिन्छ। येसैमा फ्लेक्सरकार्पाई आलनेरिस र फ्लेक्सर प्रोफन्डस डिजिटोरम मासल्स र येक्सटेन्सरकार्पाई आलनेरिस मासलको आपोन्युरेसिस आटाचमेन्ट हुन्छ। यो वर्डरको लोवर फोर्थ स्मुथ र राउन्ड हुन्छ। येसैले इन्टर्नेल र पोष्टीरियेर सर्फेसलाई सेपारेट गराउ छ।

---

येक्सटर्नेल वर्डरको बयान।

येस्को दोश्रो नाम इन्टर वोसीयेस वर्डर भन्छन। यो आवभमा २ लाइन्स भयेर उठी तल १ लाइनभै गयाको छ, येहि २ लाइनको बीचको जगामा सुपोनेटर ब्रोभिस मासलको १ पार्ट आटाचमेन्ट हुन्छ। यो वर्डरको मिडिल प्रामीनेन्ट हुन्छ। लोवर भाग स्मुथ र राउन्ड हुन्छ। यो वर्डरको अपर फोर्थ छोडेर अरु बाकीमा इन्टरवोसियेस मेम्ब्रेन आटाचमेन्ट हुन्छ। यो वर्डरले आन्टीरियेर र पोष्टीरियेर सर्फेसलाई सेपारेट गराउ छ।

---

नं ४२ लेफ़्ट फोर आर्म की बोनस पोष्टरियर साफेस ।



१ ट्राइसेप स । २ सावक्लिउटेनियास । ३ फ्लेक सार सावलिमिस डिजिटोराम । ४ एन कोनियास । ५ पीवलिक लाइन । ६ फ्लेक सार डिजिटोराम प्रोफाण्डास । ७ एक्स्टेन्सार कार्पाइ आलनैरिस । ८ एक्स्टेन सार लगास पलिसिस । ९ एक्स्टेन सार इन्डिसिस । १० एक्स्टेन सार कार्पि आल्नारिसलाई । ११ एक्स्टेन सार सिर्मिस डिजिटाईलाइ । १२ एक्स्टेन सार ब्रिभिस र एक्स्टेनसार कमिउनिस डिजिटोराम लाइ । १३ एक्स्टेनसार लगास पलिसिस लाइ । १४ एक्स्टेनसार कार्पि रेडियालिस ब्रिभिर लाइ । १५ एक्स्टेनसार कार्पि रेडियालिस लंगियर लाई । १६ एक्स्टेनसार ब्रिभिस पल्लिसिस । १७ एक्स्टेनसार असिस मेटाकार्पि पलिसिस । १८ प्रोनेटार रेडियाइ टिरिस । १९ सुपाइनेटार ब्रिभिस ।

१५ १४ १३ १२ ११ १०

आन्टीरियेर सर्फेस को बयान।

• यो सर्फेस वीलो भन्दा आवभ ब्रड हुन्छ। अपर थ्री फोर्थ कन्केभ हुन्छ। येसैमा फ्लेक्सर प्रोफन्डस डिजिटोरम मासल आटाचमेन्ट हुन्छ। येस्को लोवर फोर्थ कन्केभ हुन्छ। येसैमा प्रोनेटर क्वाड्रेटस मासल आटाचमेन्ट हुन्छ। येहि लोवर फोर्थमा १वोब्लिक प्रामीनेन्ट रिज हुन्छ। नाम वोब्लिक रिज र प्रोनेटर रिज भन्छन। अपर र मीडिल थार्ड जाहाँ मिल्छ, उही ठाउँमा न्युट्रियान्ट केनाल रहन्छ।

---

पोष्टीरियेर सर्फेसको बयान।

यो ब्याकवार्ड र आउटवार्ड जान्छ, आवभमा ब्रड र कन्केभ हुन्छ। मिडिलमा थोरै न्यारो र कन्भेक्स हुन्छ। वीलोमा न्यारो र स्मुथ राउन्डेट हुन्छ। येस्को आवभमा १वोब्लिक रिज छ, यो रिजको आवभमा जो ट्राइयाङ्गुलर सर्फेस छ, उसैमा यानकोनियास मासलको इन्सर्सन हुन्छ। यो रिजमा सुपीनेटर ब्रीभीस मासल आटाचमेन्ट हुन्छ। येस्को वीलोमा १लङ्गीच्युडिनल रिजले यो सर्फेसलाई २भाग गर्छ, कोही २ले येस्को नाम पार्पेन्डीक्युलर लाइन भन्छन, येस्को इन्टर्नलपार्ट स्मुथ र कन्केभ हुन्छ। येसैमा येक्सटेन्सरकापोई आलनेरिसले काभार गर्छ, येस्को येक्सटर्नल-पोर्सन वाइड र राफ हुन्छ। येसैमा सुपोनेटर ब्रीभीस मासल र येक्सटेन्सर ओसिसमेटाकार्पोई पलिसिस र येक्सटेन्सर लाङ्गस पलिसिस र येक्सटेन्सर इन्डीसिस मासलको पार्टस आटाचमेन्ट हुन्छ।

इन्टर्नल सर्फेसको बयान ।

येस्को आवभमा ब्रड र कन्केभ हुन्छ । बीलोमा न्यारो र कन्भेक्स हुन्छ । येस्को अपर थ्री फोर्थमा फ्लेक्सर प्रोफन्डस डिजिटोरम मासल आटाचमेन्ट हुन्छ । येस्को लोवर फोर्थमा सावकुटेनियास हुन्छ ।

---

लोवर येक्सट्रिमिटीको बयान ।

येस्को आकार स्माल हुन्छ । यो रिष्टजयेन्टको आर्टिकुलेशनमा लाग्दैन, येस्को २ येमीनेन्स हुन्छ । आउटर येमोनेन्स लार्ज राउन्ड र आर्टिकुलर येमीनेन्स हुन्छ । नाम हेड आफ दी आल्ना भन्छन । इन्नर येमीनेन्स न्यारो प्रोजेक्टिङ नान आर्टिक्युलर हुन्छ । नाम ष्टाइलयेड प्रसेस भन्छन । हेडमा १ आर्टिक्युलर फ्यासेट छ, येस्को १ पार्टमा रिष्टजयन्ट जोर्नलाई फाइब्रो कार्टिलेज रहन्छ । रिमेनिङपोर्सनमा रेडिआसको सिगमाईड क्याभिटीको साथ आर्टिकुलेशन हुन्छ । यो आल्नाको इन्नर र ब्याकपार्टबाट ष्टाइलयेड प्रसेस प्रोजेक्ट गर्छ, यो हेड भन्दा थोरै लोवरदिग्मा जान्छ । येसैमा रिष्टजयेन्टको इन्टर्नल ल्याटास्याल लीगामेन्ट आटाचमेन्ट हुन्छ । हेड र ष्टाइलयेड प्रसेसको बीचमा १ डीप्रेसन छ । येसैमा ८ [illegible] इन्टर आर्टिक्युलर फाईब्रो कार्टिलेज आटाचमेन्ट हु[illegible] बी[illegible] स्यालो ग्रुभ रहन्छ । येसबाट [illegible] टेन्डन आटाच[illegible] ।

न २६ ईनफिरियर म्याकसिलारि बोन इनार सार्फेस।




१। जिनि यो हाइयो ग्लोसास।    २। जिनि यो हाइयो डियास।

३। माइलो हायडरिज।

न २७ हाइयड वोन एण्टिरियर सार्फेस।




१। मिडल कन ष्ट्रिकटार। २। हाइवो ग्लोसास। ३। कण्ड्री ग्लोसास। ४। जिनिवो हाइवो ग्लोसास। ५। लेसार कर्णुया। ६। ग्रेटार कर्णुया। ७। वडि। ८। जिनिवो हाइयड। ९। ष्टार्नो हाइयड। १०। मायलो हाइयड। ११। थीमो हाइयड। १२। ष्टाइलो हाइयड। १३। थाइरी हाइयड।

### आल्ना बोनको
आर्टिकुलेशन २ बोन्स।

रेडिआस बोन १
ह्युमेरस बोन १

---

### आल्ना बोनको
मासल्स १४ हुन्छन।

ट्राईसेप्स।
२ यानकोनीयास।
३ फ्लेक्सरकार्पाई आलनेरिस।
४ ब्रेकीयालिस आन्टाइकस।
५ प्रोनेटर रेडिआई टेरिस।
६ फ्लेक्सर सब्लिमीस डिजिटोरम।
७ फ्लेक्सर प्रोफन्डस डिजिटोरस।
८ फ्लेक्सर लाङ्गस पलीसिस।
९ प्रोनेटर क्वाड्रेटस।
१० येक्सटेन्सरकार्पाई आलनेरिस।
११ सुपीनेटर ब्रीभीस।
१२ येक्सटेन्सर असिसमेटाकार्पाई पलीसिस।
१३ येक्सटेन्सर लाङ्गस पलीसिस।
१४ येक्सटेन्सर इन्डीसिस।

---

## रेडिआस बोनको बयान।

यो फोर आरमको आउटर साईडमा हुनाले आल्नाको संग संगै रहन्छ। येस्को अपर येन्ड स्माल हुन्छ। येलत्रोजयेन्टको १ पार्ट बन्छ। येस्को लोवरयेन्ड लार्ज हुन्छ। रिष्टजयन्टको १ पार्ट बन्छ येस्को १ स्याफ्ट। २ येक्सट्रिमिटीज हुन्छ।

---

अपर येक्सट्रिमिटीको बयान।

येस्माः— १ हेड। १ नेक। १ ट्युबेरोसिटि रहन्छन।

हेड सिलिन्डीकल हुन्छ, येस्को अपर सर्फेस डीप्रेष्ट हुन्छ। येसैको साथ ह्युमेरस बोनको रेडिआल हेडको साथ आर्टिकुलेशन हुन्छ। हेडको सार्कम फारेन्समा १ स्मुथ आर्टिकुलर सर्फेस हुन्छ। ताजा भयामा कार्टिलेज रहन्छ। यो इन्टर्नलदिग्मा ब्रड हुन्छ। आल्नाको लेसरसिगमाइड क्याभिटीको साथ आर्टिकुलेशन हुन्छ। येस्को सार्कम फारेन्सको बाकी भाग न्यारो हुन्छ। अर्बिक्युलर लीगामेन्टको भीत्र रोटेट गर्छ। हेडको तल १ राउन्ड स्मुथ कन्स्ट्रिक्टेड हुन्छ। नाम नेक येस्को बीहाईन्डमा १ रिज छ, तेसैमा सुपिनेटर ब्रीभीस मासलको १ पार्ट आटाचमेन्ट हुन्छ। नेकको बीनिथ, इन्नर र फ्रान्टमा १ राफ येमिनेन्स छ। नाम बाइसिपीटल ट्युबेरोसिटि, येस्को सर्फेस १ भार्टिकल लाइनले २ पार्टमा डिभाइड हुन्छ, येहि २ पार्टस मध्ये पोष्टीरियेर पार्ट राफ हुन्छ, उसैमा बाइसेप्स मासलको टेन्डन इन्सरसन हुन्छ। येस्को आन्टीरियेर पार्ट स्मुथ हुन्छ, तेसै ठाउँमा १ बार्सो रहन्छ।

नको फराक ज्यादा २ हुन्छ। इनलेट लार्ज हुन्छ। क्याभिटी स्यालो र वाइड हुन्छ। स्पाक्राम सट र वाइड हुन्छ। अवटुरेटर फोरामेन ट्राइयाङ्गुलर र स्माल हुन्छ। औटलेट लार्ज हुन्छ। कक्सिक्स मुभेवल हुन्छ। प्युविक आर्च वाइड र ज्यादा राउन्ड हुन्छ।

---

## फिमर बोनको वयान।

येस्को दोस्रो नाम थाई बोन, स्केलिटनको सब बोन्स भन्दा यो थाई बोन लाङ्ग लार्ज र ष्ट्राङ्ग बोन हुन्छ। येसैमा—

१ स्याफ्ट।

२ येक्सट्रिमिटीज हुन्छ।

---

## अपर येक्सट्रिमिटीको वयान।

येसमा—

१ हेड।

१ नेक।

१ ग्रेट्ट्रोकान्टर।

१ लेसर ट्रोकोन्टार रहन्छन्।

---

## हेडको वयान।

हेड ग्लावुलर हुन्छ। यो अपवार्ड, इनवार्ड र थोरै फर्वार्डदिग्मा जान्छ। येस्को आवभ र फ्रान्ट कन्भेक्स हुन्छ। येस्को सर्फेस स्मुथ हुन्छ। ताजा भयामा कार्टिलेजले ढाक छ। येस्को सेन्टरमा १ डीप्रेसन हुन्छ। तेसैमा लीगामेन्ट्म आटाचमेन्ट हुन्छ।

## नेकको बयान।

यो १ फ्लयाट पिरामिडाल प्रसेस आफ़ बोन हुन्छ। हेड र स्याफ्ट जॉहा मील्छ तसै ठाउँलाई नेक भन्छन। येसै ठाउँमा १ आङ्गल हुन्छ। नेक बीफोरदेखि ब्याकवार्डसम्म फ्लयाट हुन्छ। मिडिल कन्ट्राक्टेड हुन्छ। आउटर येक्सट्रिमिटी ब्रड हुन्छ। येस्को आन्टीरियेर सर्फेसमा धेरै भ्यास्कुलर फोरामिना हुन्छ। पोष्टीरियेर सर्फेस स्मुथ, ब्रड र कन्केभ हुन्छ। येसैमा हिपजयन्टको क्यापसुलर लीगामेन्टको पोष्टीरियेर पार्ट आटाचमेन्ट हुन्छ। येस्को आधा इञ्च आवभमा पोष्टीरियेर इन्टर ट्रोकान्टरिक लाइन हुन्छ। येस्को सुपीरियेर वर्डर सर्ट र थिक हुन्छ। ग्रेट्ट्रोकान्टरको येक्सटर्नेलदिग्मा टार्मिनेट हुन्छ। यो सर्फेसमा धेरै लार्ज फोरामीना हुन्छ। इन्फीरियेर वर्डर लाङ्ग र न्यारो हुन्छ। थोरै ब्याकवार्डदिग्मा गै लेसर ट्रोकान्टरमा टार्मिनेट हुन्छ।

---

## ट्रोकान्टर्सको बयान।

यो प्रामिनेन्ट्स प्रसेसेस आफ बोन हुन्छ। थाई कोरोटेड गराउनलाई धेरै मासल्स आटाचमेन्ट हुछ। ट्रोकान्टर्स २ हुन्छन।

ग्रेट्ट्रोकान्टर १
लेसर ट्रोकान्टर १

---

## ग्रेटट्रोकान्टरको वयान।

यो लार्ज इरेगुलर काड्रि ल्याटरल्ल येमिनेन्स हुन्छ।

नेकको आउटर साइडमा रहन्छ। यो थोरै आउटवार्ड र व्याक-वार्डस्मा जान्छ।

येस्को २ सर्फेस, ४ वर्डर्स हुन्छन।

येक्सटर्नल सर्फेस काइरि ल्याटास्याल ब्रड राफ र कन्भेक्स हुन्छ। येस्को पोष्टीरियेर सुपीरियेर आङ्गलदेखि आन्टीरियेर इन्फीरियेर आङ्गलसम्म १ प्रामिनेन्टलाइन हुन्छ। येसैमा ग्लुटिआस मिडिआस मासलको टेन्डन आटाचमेन्ट हुन्छ। यो लाइनको आवभमा १ ट्राइयाङ्गुलर सर्फेस हुन्छ। कोही २ को यो ठाउँमा राफ हुनाले ग्लुटिआस मिडिआस मासलको टेन्डनको १ पार्ट आटाचमेन्ट हुन्छ। कोही २ को यो ठाउँमा स्मुथ हुन्छ। यो स्मुथ हुनाले वार्सा रहन्छ।

यो लाइनको बीलो र बीहाईन्डमा १ स्मुथ ट्राइयाङ्गुलर सर्फेस हुन्छ। येसैमा ग्लुटिआस म्याक्सिमास मासलको टेन्डन र १ वार्सा पनी रहन्छ।

इन्टर्नल सर्फेसको वेसमा १ डीप डिप्रेसन हुन्छ। नाम डिजिटेल फसा। येस्को दोस्रो नाम ट्रोकान्टरिक फसा, येसैमा अवटुरेटर येक्सटर्नस मासलको टेन्डन आटाचमेन्ट हुन्छ। येस्को फ्रान्टमा १ इम्प्रेसन छ, तेसैमा अवटुरेटर इन्टर्नस र २ ग्यासिलाई मासल आटाचमेन्ट हुन्छ।

येस्को सुपीरियेर वर्डर फ्री, थिक र इरेगुलर हुन्छ। येस्को सेन्टरमा पाइरीफर्मीस मासलको आटाचमेन्ट हुनलाई १ इम्प्रेसन हुन्छ।

ग्रेट्ट्रोकान्टरको बेस र स्याफ्टको आउटर सर्फेस जाहाँ मील्छ, तेसै ठाउँमा इन्फीरियेर वर्डर हुन्छ, येसै ठाउँमा १ राफ प्रामिनेन्ट रिज हुन्छ, तेसैमा भ्यास्टस येक्सटर्नस मासलको अपर पार्ट आटाचमेन्ट हुन्छ।

आन्टीरियेर वर्डर प्रामिनेन्ट र इरेगुलर हुन्छ। येसैको आउटर पार्टमा ग्लुटिआस मिनिमास मासल आटाचमेन्ट हुन्छ।

पोष्टीरियेर वर्डर प्रामिनेन्ट हुन्छ। येसैले डिजिटेल फसाको व्याकपार्ट बन्छ।

---

## लेसर ट्रोकान्टरको बयान।

यो १ कनिकेल येमिनेन्स हुन्छ। नेकको बेसको लोवर र व्याकपार्ट देखि प्रोजेक्ट गर्छ। येस्को बेस ट्राइयाङ्गुलर हुन्छ। येसमा ३ वर्डर्स हुन्छन्।

इन्टर्नल वर्डर नेकको लोवर वर्डरको साथ मील्छ।

येक्सटर्नल वर्डर पोष्टीरियेर इन्टर ट्रोकान्टरिक लाइनको साथ मील्छ।

इन्फीरियेर वर्डर लिनिया असपेराको मीडिल डिभिजनको साथ मील्छ। येस्को समीटमा स्वास म्याग्नस मासलको टेन्डन इन्सर्सन हुन्छ।

लेसर ट्रोकान्टरको बीछोमा जो स्याफ्ट हुन्छ। तेसैमा इलायाकस मासलको इन्सर्सन हुन्छ। येस्को फ्रान्टमा भ्यास्टस इन्टर्नस मासल र बीहाईन्डमा पेक्टिनियास मासल आटाचमेन्ट हुन्छ।

नेकको अपर र फ्रान्ट पार्ट जाहाँ ग्रेटट्रोकान्टरको साथ मील्छ, तेसै ठाउँमा १ प्रामिनेन्स हुन्छ। नाम ट्युवर्कल आफ दी फीमर, येसै ठाउँमा ५ मासलको भेट हुन्छ। येक्सटर्नलदिग्मा ग्लुटिआस मिनिमास मासल। वीलोमा भ्याष्टस येक्सटर्नस र अवटुरेटर इन्टर्नस मासलको टेन्डन र आवभमा ग्येमिलाई माने गेमिलस सुपीरियेर र ग्येमिलस इन्फीरियेर मासल्स मील्छ।

यो ट्युवर्कलको डाउनवार्ड र इनवार्डमा स्पाइरेल लाइन आफ दी फीमर छ। येस्को दोस्रो नाम आन्टीरियेर इन्टर ट्रो-कान्टरिक लाइन भन्छन।

येस्को अपर हाप राफ हुन्छ। येसैमा हिपजयन्टको क्याप्-सुलर लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को लोवर हापमा भ्याष्टस इन्टर्नसको अपर पार्ट आटा-चमेन्ट हुन्छ।

ग्रेट्ट्रोकान्टरको समीट देखि डाउनवार्ड, इनवार्डदिग्मा र नेकको पोष्टीरियेर सर्फेसमा १ प्रामिनेन्ट रिज हुन्छ। नाम पोष्टी-रियेर इन्टर ट्रोकान्टरिक लाइन। पोष्टीरियेर इन्टर ट्रोकान्टरिक लाइनको मिडिलमा १ रिज हुन्छ। नाम लिनियाक्वाड्रेटाई, येसैमा क्वाड्रेटस फीमरिस र आड्डाक्टर म्याग्नस मासलसको थोरै फाइ-वर्स आटाचमेन्ट हुन्छ।

---

स्याफ्टको बयान।

येस्को अकार सिलेन्ड्रीकेल हुन्छ। यो थोरै आर्च हुन्छ। येस्को फ्रान्ट कन्भेक्स हुन्छ। वीहाईन्ड कन्केभ हुन्छ, वीहाईन्डमा

१ प्रामिनेन्ट लङ्गीच्युडिनल रिज हुन्छ। नाम लिनिया अस्पेरा, यो स्याफ्टको ३ वर्डर्स, ३ सर्फेसेस हुन्छ।

३ वर्डर्स मध्ये लिनिया अस्पेरा पोष्टीरियरमा रहन्छ। अरु २ वर्डर्स ल्याटारलाल्दिग्मा रहन्छ।

---

## लिनिया अस्पेराको बयान।

फीमरको मीडिल थार्डमा १ प्रामिनेन्ट लङ्गीच्युडिनल रिज वा क्रेष्ट हुन्छ। नाम लिनिया अस्पेरा भन्छन, येसैमा—

येक्सटर्नल श्लीप १
इन्टर्नल श्लीप १
राफ इन्टर मिडियेट १ रहन्छ।

यो क्रेष्टको आवभमा ३ रिजेस छ, येस मध्ये यक्सटर्नल रिज राफ हुन्छ। यो ग्रेटट्रोकान्टरको वेस्को साथ मील्छ। कोही कोहीले यो रिजलाई ग्लुटियाल रिज भन्छन। येसैमा ग्लुटियास म्याक्सिमास मासलको पार्ट आटाचमेन्ट हुन्छ। येस्को अपर पार्टमा १ राउन्ड व्युवर्कल हुन्छ। मीडिल रिज ट्रोकान्टर माइनरको वेस्को साथ मील्छ। इन्टर्नल रिज फीमरको स्पाइरल लाइनको आवभमा मील्छ।

लिनिया अस्पेरा वीलोमा गै २ रिजेस हुन्छ, यो २ रिजेसको बीचमा १ ट्राइयाङ्गुलर स्पेस हुन्छ। नाम पप्लिटियाल सर्फेस, येसै ठाउँमा पप्लिटियाल आर्टरी रहन्छ। यो २ रिजेस मध्ये आउटर रिज प्रामिनेन्ट हुन्छ। आउटर कन्डाइलको समीट सम्म जान्छ।

नं ४६ राईटअस इनमिनेटाम इण्टार्नाल सार्फेस ।




१ ट्रानसभार्सलिस एवडमिनिस । २ कोयोड रेटास लामोराम । ३ इरेक्टार स्पाइनि । ४ ईलियाक फसा । ५ रेक्टास । ६ सोयास पार्भास । ७ ईलिवो पेक्टिनियाल लाईन । ८ अबडिउरेटार भेसल सर नार्भ लाईग्रुभ । ९ ल्लिभेटार एनाई । १० कर्म्पसार यूरेथ्रि । ११ क्रास पेनीस । १२ इरेक्टार पेनिस । १३ ट्रानभार्स पेरिनियाइ । १४ ल्लिभेटार एनाइ । १५ ककसिजियास । १६ सेक्राम को साथ । १७ सेक्रो इलियक लिगामेण्ट लाइ । १८ अबटिउ रेटार इण्टार्नास ।

नं ४७ राईट फिमार ग्याण्टिरियार सार्फे स।



१ हेड्। २ लिगामेण्ट टिरिसलाइ खालटो। ३ नेक। ४ लेसार ट्रोक्याण्टार सोयास लागने। ५ ग्रेट ट्रोक्याण्टार। ६ पाइरिफर्मिस। ७ आवटिउ रेटार इण्टार्नासर गेमेलाइ। ८ ग्लुटियास मिनिमास। ९ भ्यासटास एकष्टर्निस। १० क्रुरियास ११ सबक्रुरियास। १२ इनार टिउवार सिटि। १३ इनार कण्डाइल। १४ आउटार कण्डाइल। १५ प्याटेला के साथ लागने। १६ आउटार टिउवार सिटि।

इन्नर रिजको अपर पार्टमा फीमोरल आर्टरी जान्छ। यो वीलोमा इन्टर्नल कन्डाइलको समीटमा टर्मिनेट हुन्छ। येसै ठाउँमा १ स्माल ट्युवर्कल हुन्छ। नाम आड्डाक्टर ट्युवर्कल, येसैमा आड्डाक्टर म्याग्नस मासलको टेन्डन आटाचमेन्ट हुन्छ।

लिनिया अस्पेराको इन्नर लीपमा र येस्को आवभ र वीलोमा भ्याष्टस इन्टर्नस मासल आटाचमेन्ट हुन्छ। येस्को आउटर लीप र आवभमा भ्याष्टस येक्सटर्नस मासल आटाचमेन्ट हुन्छ।

लिनिया अस्पेरा र उस्को आवभको आउटर प्रोलाङ्गेशन र वीलोको इन्नर प्रोलाङ्गेशन यो तीनै ठाउँमा आड्डाक्टर म्याग्नस मासल आटाचमेन्ट हुन्छ।

भ्याष्टस येक्सटर्नसको र आड्डाक्टर म्याग्नसको बीचको आवभमा ग्लुटिअस म्याक्सिमास मासल वीलोमा सट् हेड आफ दी बाइसेप्स मासल आटाचमेन्ट हुन्छ।

आड्डाक्टर म्याग्नस र भ्याष्टस इन्टर्नसको बीचमा ४ मासल्स आटाचमेन्ट हुन्छ। आवभमा इलायोकस र पेक्टिनियास-मासल्स। वीलोमा आड्डाक्टर ब्रिभीस र आड्डाक्टर लाङ्गस मासल्स आटाचमेन्ट हुन्छ।

लिनिया अस्पेराको सेन्टरको थोरै वीलोमा न्युट्रियान्ट् केनाल्‌ हुन्छ। फीमरको २ ल्याटास्याल वर्डर्सको दाग थोरै हुन्छ। येस मध्ये आउटर वर्डर ग्रेट्ट्रोकान्टरको आन्टीरियेर इन्फीरियेर आङ्गलदेखि येक्सटर्नल कन्डाइलको आन्टीरियेर येक्सट्रिमिटी-सम्म हुन्छ।

यो इन्नर वर्डर स्पाइरल लाइनदेखि इन्टर्नल कन्डाइलको आन्टीरियेर येक्सट्रिमिटीसम्म हुन्छ। इन्टर्नल वर्डरको इन्टर्नलसम्म क्रुरिआस मासल आटाचमेन्ट हुन्छ।

आन्टीरियेर सर्फेसको बयान।

स्याफ्टको २ ल्याटास्याल वर्डर्सको ठाउँलाई आन्टीरियेर सर्फेस भन्छन। यो स्मुथ कन्भेक्स र सेन्टर भन्दा [illegible] र बीलोमा ब्रड हुन्छ। येस्को अपर ३/४ थ्री फोर्थमा क्रुरिअस मासल आटाचमेन्ट हुन्छ। लोवर फोर्थमा सावक्रुरिअस मासल थोरै आटाचमेन्ट हुन्छ यो ठाउँमा १ वार्सा नीजयन्टको साइनोभियाल मेम्ब्रेन रहन्छ।

येक्सटर्नल सर्फेसको बयान।

लिनिया अस्पेराको आउटर लीप र येक्सटर्नल वर्डरको बीचको ठाउँलाई येक्सटर्नल सर्फेस भन्छन। येसैको अपर ३/४ थ्री फोर्थमा क्रुरिअस मासलको आउटर पोर्सन आटाचमेन्ट हुन्छ।

इन्टर्नल सर्फेसको बयान।

लिनिया अस्पेराको इन्टर्नल लीप र इन्टर्नल वर्डरको बीचको ठाउँलाई इन्टर्नल सर्फेस भन्छन येसै ठाउँलाई भ्याष्टस इन्टर्नस मासलले काभार गर्छ।

लोवर येक्सटिमिटीको बयान।

यो फीमरको अपर येक्सट्रिमिटी भन्दा लार्ज हुन्छ। येस्को आकार क्युवय्रेड हुन्छ। बीफोर देखि व्याकवार्डस फल्याट हुन्छ।

येसमा २ लार्ज येमिनेन्स हुन्छ। नाम कन्डाइल्स, यो २ कन्डाइल्सको बीचमा र फ्रान्टमा १ स्मुथ डीप्रेसन हुन्छ। नाम ट्रक्लिया येस्को बीहोईन्डमा १ नच हुन्छ। नाम इन्टर कन्डीलयेट नच।

यो २ कन्डाइल्स मद्धे येक्सटर्नल कन्डाइल आन्टीरियेरमा प्रामिनेन्ट हुन्छ। येस्को आन्टीरो पोष्टीरियेर र टयान्सभर्स डायामिथेटर्स अर हुन्छ। इन्टर्नल कन्डाइल न्यारो लाङ्ग र इन्फीरियेरदिग्मा प्रामिनेन्ट हुन्छ।

यो २ कन्डाइल्स फ्रान्टमा मील्छ। यो ठाउँमा १ स्मुथ ट्रक्लियार सर्फेस हुन्छ। येसैमा प्याटिला बोनको साथ आर्टिकुलेशन हुन्छ। येस्को मिडिमला १ ग्रुभ हुन्छ। यो डाउनवार्ड र ब्याकवार्डदिग्मा गै इन्टर कन्डीलयेट नचमा मील्छ। येस्को येक्सटर्नल वर्डर प्रामिनेन्ट हुन्छ। इन्टर कन्डीलयेट नचमा कुसियाल लीगामेन्टस रहन्छ। यो नचको २ दिग्मा २ कन्डाइल्स हुन्छ। येस्को फ्रान्टमा स्याफ्टको लोवर येन्ड रहन्छ।

---

## आउटर कन्डाइलको वयान।

येक्सटर्नल कन्डाइलको आउटर सर्फेसमा १ लिटिल येमिनेन्स हुन्छ। नाम आउटर ट्युवेरोसिटी, इन्नर ट्युवेरोसिटी भन्दा यो आउटर ट्युवेरोसिटी सानू हुन्छ। येसैमा नी जयन्टको येक्सटर्नल ल्याटास्याल लीगामेन्ट्स आटाचमेन्ट हुन्छ। येस्को बिनीथमा १ ग्रुभ हुन्छ। यो ग्रुभमा १ डीप्रेसन हुन्छ। येसैको फ्रान्टमा पप्लिटियास मासलको अरिजिन हुन्छ। नी जयन्टको फ्लेक्सन

गर्दा यो पप्लिटियास मासलको टेन्डन येसै ग्रुभमा रहन्छ। यो ग्रुभ स्मुथ हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्छ। यो अपूवार्ड र ब्याकवार्डदिग्मा गै कन्डाइलको पोष्टीरियेर येक्सट्रिमिटीको साथ मील्छ। आउटर कन्डाइलको इन्नर सर्फेसको पोष्टीरियेर पार्टमा आन्टीरियेर क्रुसियाल लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को इन्फीरियेर सर्फेस [illegible] कन्भेक्स स्मुथ र ब्रड हुन्छ। येस्को पोष्टीरियेर येक्सट्रिमिटी कन्भेक्स र स्मुथ हुन्छ। आर्टिकुलर सर्फेसको आवभमा १ डीप्रेसन हुन्छ। तेसैमा ग्याष्टक निमियास मासळको आउटर हेडको टेन्डन आटाचमेन्ट हुन्छ। येस्को आवभमा प्लान्टेरिस मासल अरिजिन हुन्छ।

---

## इन्नर कन्डाइलको बयान।

येस्को इन्नर सर्फेसमा १ कन्भेक्स राफ येमिनेन्स हुन्छ। नाम इन्नर ट्युबेरोसिटी, येसैमा इन्टर्नल ल्याटारुयाल लीगामेन्ट आटाच्मेन्ट हुन्छ।

इन्नर कन्डाइलको आउटर साइडको आन्टीरियेर पार्टमा पोष्टीरियेर क्रुसियाल लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को इन्फीरियेर सर्फेस दोस्रो नाम आर्टिकुलर सर्फेस कन्भेक्स हुन्छ। येस्को आवभमा र बीहाइन्डमा १ डीप्रेसन हुन्छ। येसैमा ग्याष्टक निमियास मासलको इन्नर हेडको टेन्डन अरिजिन हुन्छ।

---

## फीमर वोनको

आर्टिकुलेशन ३ वोन्स ।

थावममा—

असइनोमिनेटस वोन १

घौलोमा—

टिविया वोन १ र

[illegible]

---

## फीमर वोनको

मासल्स २३ हुन्छन ।

१ ग्लुटिअस म्याक्सिमास ।
२ ग्लुटिअस मिडियास ।
३ ग्लुटिअस मिनिमास ।
४ पाइरीफर्मीस ।
५ अवटुरेटर येक्सटर्नस ।
६ अवटुरेटर इन्टर्नस ।
७ ग्यामिलस सुपीरियेर ।
८ ग्यामिलस इन्फीरियेर ।
९ क्वाड्रेटस फिमरीस ।
१० स्वास म्याग्नस ।
११ इलायाकस ।
१२ भ्याष्टस येक्सटर्नस ।
१३ भ्याष्टस इन्टर्नस ।
१४ वाइसेप्स ।

१५ पेक्टिनियास ।

१६ आड्डाक्टर म्याग्नस ।

१७ आड्डाक्टर लाङ्गस ।

१८ आड्डाक्टर ब्रोभिस ।

१९ क्रुरियास ।

२० सात्र क्रुरियास ।

२१ ग्याष्टक निमियास ।

२२ प्लान्टेरिस ।

२३ पप्लिटियाल ।

---

## लेगको बयान ।

लेग ३ बोन्सले बन्छ ।

प्याटिला बोन १
टिबिया बोन १
फीउला बोन १

---

## प्याटिला बोनको बयान ।

यो फ्ल्याट र ट्राइयाङ्गुलर बोन हुन्छ । नी जयन्टको अन्टीरियेर पार्टमा रहन्छ । कोही कोहीले येसलाई सेसामयेड बोन पनी भन्छन । येस्को—

आन्टीरियेर सर्फेस १
पोष्टीरियेर सर्फेस १,

३ वर्डर्स र १ येपेक्स हुन्छ ।

आन्टीरियेर सर्फेसको बयान।

यो कन्भेक्स हुन्छ। येसैमा न्युट्रियान्ट भेसल्स जानलाई धेरै स्माल अपरचर्स हुन्छ। यो सर्फेसमा क्वाड्रि सेप्स येक्सटेन्सर मासलको टेन्डनले काभार गर्छ।

---

पोष्टीरियेर सर्फेसको बयान।

येसैमा १ स्मुथ वोभ्याल आर्टिकुलर सर्फेस हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्छ। १ भार्टिकल रिजले येसलाई २ फ्यासेट्समा डिभाइड गर्छ। यो रिज फीमरको ट्रक्लियार सर्फेसमा जो ग्रुभ हुन्छ तेसैको साथ आर्टिकुलेशन हुन्छ। यो २ फ्यासेट्स २ कन्डाइल्सको आर्टिकुलर सर्फेसको साथ आर्टिकुलेशन हुन्छ। आउटर फ्यासेट्स डीप र ब्रड हुन्छ। आउटर कन्डाइलको साथ आर्टिकुलेशन हुन्छ, येसैले दिग छुट्याउँ छ।

कोही कोही प्याटिला बोनमा ७ फ्यासेट्स पनी हुन्छ।

आर्टिकुलर सर्फेसको बीलोमा १ राफ कन्भेक्स नान आर्टिकुलर डोमेसन हुन्छ। येसैको लोवर हापमा लीगामेन्टम प्याटेलि आटाचमेन्ट हुन्छ। येस्को अपर हाप र टिबियाको हेडको बीचमा याडिपोस्टिस्पुले सेपारेट गराउँ छ।

---

सुपीरियेर बर्डरको बयान।

यो थिक हुन्छ। बीहाइन्ड देखि डाउनवार्ड र फर्वार्डदिग्मा जा छ। येसैमा रेक्टस र क्रुरियास मासल्सबाट आयाको क्वाड्रि सेप्स येक्सटेन्सरको पोर्सन आटाचमेन्ट हुन्छ।

ल्याटान्याल वर्डरको बयान

यो थिन हुन्छ। बीलोमा मील्छ, येसैमा भ्याष्टस येक्सट्र्नल र भ्याष्टस इन्टर्नल मासलसबाट आयाको काड्रि-सेप्स येक्सटेन्सर मासलको पोर्सन आटाचमेन्ट हुन्छ। येस्को येपेक्स प्वाइन्टेट हुन्छ। येसैमा लीगामेन्टम प्याटिलि आटाचमेन्ट हुन्छ।

---

प्याटिला बोनको

आर्टिकुलेशन १।

कन्डाइल्स आफ दी फीमर बोन।

---

प्याटिला बोनको

मासल्स ४ हुन्छन्।

१ रेक्टस।
२ क्रुरिअस।
३ भ्याष्टस येक्सटर्नल।
४ भ्याष्टस ईन्टर्नल।

थाई यो ४ मासल्स १ साथ टेन्डन भयेर प्याटिलाको साथ मिलेको छ, नाम काडरिसेप्स, येक्सटेन्सर क्रुरिस।

---

## टिबिया बोनको बयान।

यो लेगको फ्रान्ट र इन्नर साईडमा रहन्छ। यो बोन फिमर बोन बाहेक स्क्यालिटनमा लाङ्ग र लार्ज हुन्छ। येस्को आकार

प्रिजमयेड हुन्छ । येस्को आत्रभमा अलि ठूलो हुन्छ । येसैले
नी ज्वयन्ट बन्छ । येस्को—

१ स्याफ्ट ।
२ येक्सट्रिमिटीज हुन्छन् ।

---

## अपर येक्सट्रिमिटीको बयान ।

येस्को दोस्रो नाम हेड, यो लार्ज हुन्छ। २ दिग्मा १।१ गरि २ येमिनेन्स हुन्छ। नाम ट्युबेरोसिटीज, येस्को सुपीरियेरमा स्मुथ कन्केभ सर्फेस हुन्छ। यो फीमरको कन्डाइल्सको साथ आर्टिकुलेशन हुन्छ।

यो इन्टर्नल आर्टिकुलर सर्फेस लाङ्ग र डीप हुन्छ। फीमरको इन्टर्नल कन्डाइलको साथ आर्टिकुलेशन हुन्छ।

येक्सटर्नल आर्टिकुलर सर्फेस ब्रड र फ्ल्याट हुन्छ। फीमरको येक्सटर्नल कन्डाइलको साथ आर्टिकुलेशन हुन्छ।

२ आर्टिकुलर सर्फेसको बीच र पोष्टीरियेरमा १ येमिनेन्स छ। नाम स्पाइनस प्रसेस आफ दी टिबिया भन्छन। येसैको २ दिग्मा २ प्रामिनेन्ट ट्युबर्कल्स हुन्छ। येसैमा सेमिलुनर फाइब्रो कार्टिलेजेसको येक्सट्रिमिटीज आटाचमेन्ट हुन्छ।

यो स्पाइनस प्रसेसको फ्रान्ट र बीहाईन्डमा १।१ राफ डीप्रेसन हुन्छ। येसैमा आन्टीरियेर र पोष्टीरियेर क्रुसियाल लीगामेन्ट्स र सेमिलुनर फाइब्रो कार्टिलेजेस आटाचमेन्ट हुन्छ।

ट्युबेरोसिटीजको आन्टीरियेर सर्फेसको फ्रान्टमा मिलेर १ सिङ्गल फ्ल्याट लार्ज ट्राइयाङ्गुलर सर्फेस हुन्छ, यो ट्राइयाङ्गुलर सर्फेसको आबभ ब्रड हुन्छ। येसैमा धेरै भ्यास्कुलर फोरामीना हुन्छ। यो ट्राइयाङ्गुलर सर्फेसको बीचमा १ प्रामिनेन्ट येलिभेसन हुन्छ। नाम ट्युबर्कल आफ टी टिबिया, यो ट्युबर्कलको लोवर हाफ राफ हुन्छ। येसैमा लीगामेन्टम प्याटिली आटाचमेन्ट हुन्छ। येस्को अपर हापमा १ स्मुथ फ्यासेट हुन्छ। ताजा भयामा १ वार्सा रहन्छ।

---

### ट्युबेरोसिटीको
#### पोष्टीरियेर सर्फेसको बयान।

यो २ ट्युबेरोसिटीजको बीचमा १ स्यालो डीप्रेसन हुन्छ। नाम पप्लिटियाल नच भन्छन, येसैमा पोष्टीरियेर क्रुसियाल लीगामेन्टको १ पार्ट र नी जयन्टको पोष्टीरियेर लीगामेन्टको १ पार्ट आटाचमेन्ट हुन्छ।

इन्नर ट्युबेरोसिटीको पोष्टीरियेरदिग्मा १ डीप ट्रान्सभर्स ग्रुभ हुन्छ। येसैमा सेमिमेम्ब्रेनोसस मासलको टेन्डनको १ फ्यासिक्युली इनसरसन हुन्छ। यो इन्नर ट्युबेरोसिटीको ल्याटास्याल सर्फेस कन्भेक्स राफ र प्रामिनेन्ट हुन्छ। येसैमा इन्टर्नल ल्याटास्याल लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को आउटर ट्युबेरोसिटीको पोष्टीरियेरदिग्मा १ फ्ल्याट आर्टिकुलर फ्यासेट छ, यो डाउनवार्ड, आउटवार्ड र ब्याकवार्डदिग्मा जान्छ। येसैमा फीबुलाको साथ आर्टिकुलेशन हुन्छ।

आउटर ट्युवेरोसिटीको ल्याटारयाल सर्फेस कन्भेक्स राफ र प्रमिनेन्ट हुन्छ। येसैमा १ राफ येमिनेन्स छ, यो ट्युवर्कल आफ दी टिबियाको अपर वर्डरमा रहन्छ। येसैमा इलियो टिबियाल व्यान्ड आटाचमेन्ट हुन्छ। येस्को वीलोमा येक्सटेन्सर लाङ्गस डिजिटोरम र वाइसेप्स मासलसको १ श्लीप आटाचमेन्ट हुन्छ।



स्याफ्टको वयान।

येस्को आकार ट्राइयाङ्गुलर र प्रीजमयेड हुन्छ। येस्को आवभ ब्रर्ड हुन्छ तल सानू २ हूँदै जान्छ।

येस्को ३ वर्डर्स र ३ सर्फेसेस हुन्छ।

आन्टीरियेर वर्डर १
इन्टर्नल „ १
येक्सटर्नल „ १
इन्टर्नल सर्फेस १
येक्सटर्नल „ १
पोष्टीरियेर „ १

आन्टीरियेर वर्डरको वयान।

तीन वर्डर्स मध्ये यो वर्डर प्रामिनेन्ट हुन्छ। नाम क्रेष्ट आफ दी टिबिया, दोस्रो नाम शीन भन्छन, यो शीन आवभमा ट्युवर्कलदेखि वीलोमा इन्नरम्यालिवलसको आन्टीरियेर मार्जीनसम्म रहन्छ। यो वर्डरको अपर टु थार्डस प्रमिनेन्ट हुन्छ। वीलोमा राउन्ड र स्मुथ हुन्छ। येसैमा डीप फ्यासा आफ दी लेग आटाचमेन्ट हुन्छ।

### इन्टर्नल बर्डरको बयान ।

यो आब्भ र वीलोमा स्मुथ र राउन्ड हुन्छ। बीचमा प्रामिनेन्ट हुन्छ। यो इन्नर ट्युबेरोसिटीको ब्याकवार्डदेखि बीलोमा इन्टर्नल म्यालीवसको पोष्टीरियर बर्डरसम्म रहन्छ। येस्को अपर पार्टमा नो जयन्टको इन्टर्नल ल्याटास्याल लीगामेन्ट र पप्लिटियास मासलको थोरै फाइबर्स [illegible] हुन्छ। येस्को मिडिल थार्डमा सोलियास र फ्लेक्सर लाङ्गस डिजिटोरम मासल्स आटाचमेन्ट हुन्छ।

---

### येक्सटर्नल सर्फेसको बयान ।

येस्को दोस्रो नाम इन्टर बोसियास रिज भन्छन, यो थिन र प्रमिनेन्ट हुन्छ। येसैमा इन्टर बोसियास मेम्ब्रेन आटाचमेन्ट हुन्छ। यो आब्भमा फीबुला र आर्टिकुलर फ्यासेटको फ्रान्टदेखि बीलोमा बाइफरकेड भयेर जान्छ। यो बीलोको ठाउँ राफ र ट्राइयाङ्गुलर हुन्छ। येसैमा टिबिया र फीबुलाको बन्धन गर्नेलाई इन्टर बोसियाल लीगामेन्ट आटाचमेन्ट हुन्छ।

---

### इन्टर्नल सर्फेसको बयान ।

यो स्मुथ, कन्भेक्स र बीलो भन्दा आब्भ ब्रड हुन्छ। येस्को अपर थार्डमा सार्टोरियासको टेन्डनको आपोन्युरेसिस र ग्रासाइलीस र सेमिटेन्डीनोसस मासल्सको टेन्डन्सले काभार गर्छ, येस्को बाकी भाग स्याबकुटेनियास हुन्छ।

---

येक्सटर्नल सर्फेसको बयान।

येस्को अपर टु थार्डसमा १ स्यालो ग्रुभ हुन्छ। तेसैमा टिबियालीस आन्टाइकस मासल आटाच्मेन्ट हुन्छ। येस्को लोवर थार्ड स्मुथ र कन्भेक्स हुन्छ। येस्को उइडिन देखि आउटवार्डसमा टिबियालीस, आन्टाइकस, येक्सटेन्सर, प्रोप्रिअस, ह्यालुसिस र येक्सटेन्सर, लाङ्गस डिजिटोरम, मासलसको टेन्डन्सले काभार गर्छ।

पोष्टीरियेर सर्फेसको बयान।

येस्को अपर पार्टमा १ प्रमिनेन्ट रिज हुन्छ। नाम वोब्लिकलाइन आफ दी टिबिया, यो फीबुला जोरिने आर्टिकुलर फ्यासेट देखि वोब्लिक भै डाउनवार्डदिग्मा जान्छ र इन्टर्नल वर्डरमा मील्छ। येसैमा पप्लिटियास मासल, पप्लिटियाल फ्यासा र स्वोलियास फ्लेक्सर लाङ्गस डिजिटोरम र टिबियालीस पोष्टाइकस मासलसको पार्ट आटाच्मेन्ट हुन्छ।

यो वोब्लिक लाइनको आवभमा १ ट्राइयाङ्गुलर कन्केभ सर्फेस हुन्छ। येसैमा पनी पप्लिटियाल मासल आटाच्मेन्ट हुन्छ।

पोष्टीरियेर सर्फेसको मिडिल थार्डमा १ भार्टिकल रिजले २ भाग डिभाइड गर्छ। येस्को इन्नर व्रड भागमा फ्लेक्सर लाङ्गस डिजिटोरम मासल र आउटर न्यारो भागमा टिबियालीस पोष्टाइकस मासलको पार्ट आटाच्मेन्ट हुन्छ। यो सर्फेसको बाकी भाग स्मुथ हुन्छ। येसैमा टिबियालीस पोष्टाइकस फ्लेक्सर लाङ्गस डिजिटोरम र फ्लेक्सर लाङ्गस ह्यालुसिस मासलसले काभार गर्छ। वोब्लिक लाइनको तीलोमा १ मेडालारी फोरामेन हुन्छ।

## टिवियाको लोवर येक्सट्रिमिटीको बयान।

यो अपर येक्सट्रिमिटी भन्दा यो स्माल हुन्छ। येसैमा ५ सर्फेसेस हुन्छ। येस्को इन्नर साईडमा १ ष्ट्राङ्ग प्रसेस हुन्छ। यो डाउन वार्डदिग्मा जान्छ। यो प्रसेसको नाम ईन्टर्नल म्यालीवोलास भन्छन।

येस्को ईन्फीरियेर सर्फेस काडोरल्याटास्माल र स्मु कन्केभ हुन्छ, येसैमा आष्ट्राग्यालासको साथ आर्टिकुलेशन हुन्छ।

येस्को आन्टीरियेर सर्फेस स्मुथ र आवभमा राउन्ड हुन्छ, येसैलाई टोजको येक्सटेन्सर मासरसको टेन्डन्सले काभार गर्छ। येस्को लोवर मार्जीनमा १ राफ ट्यान्सभर्स डिप्रेसन हुन्छ, तेसैमा आङ्कल जयन्टको आन्टोरियेर लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को पोष्टीरियेर सर्फेसमा १ ग्रुभ वोब्लिक भै डाउनवार्ड र इनवार्डदिग्मा जान्छ। यो ग्रुभबाट फ्लेक्सर लाङ्गस ह्यात्युसिस मासलको टेन्डन जानलाई बाटो दीन्छ।

येक्सटर्नल सर्फेसमा १ ट्राइयाङ्गुलर राफ डीप्रेसन हुन्छ। तेसैमा इन्फीरियेर इन्टर वोसियेस लीगामेन्ट आटाचमेन्ट हुन्छ। यो डीप्रेसनको लोवर पार्टमा १ स्मुथ डीप्रेसन हुन्छ। ताजा भयामा कार्टिलेजले काभार गर्छ। येसैमा फीवुलाको साथ आर्टिकुलेशन हुन्छ। यो सर्फेसमा २ प्रामिनेन्ट रिजेस हुन्छ। यो २ रिजेस आवभमा इन्टर वोसियास रिजको साथ मील्छ। यो २ रिजेसमा आन्टीरियेर र पोष्टीरियेर टिवियो फीवुलार लीगामेन्ट्स आटाचमेन्ट हुन्छ।

न ४८ राईट फिमार पोष्टरियार सार्फेस ।



१ डिजिटाल फसा अबटिउरेटार एकष्टीनास २ ग्रेट ट्रोकाण्टार ग्लुटियास मिडियास । ३ कोयाडरेटार फिमोरिस ४ ग्लुटियास म्याकसिमिस । ५ भ्यासटास एकर्टीनास । ६ क्रुरियास । ७ वाईसेप्स कोसर्ट हेड। ८ आउटार कण्डाइल । ९ प्लान टारिस । १० ग्यासट्निमियास को आउटार हेड । ११ पप्लिटियास । १२ इनार कण्डाइल । १३ गासट्निमियास को इनार हेड । १४ पप्लिडियाल स्पेस । १५ फिमाराल भेसल लाइ आर्च । १६ भ्यासटास इण्टानीस । १७ एड्डाकटार मार्गिनास । १८ इलियाकास । १९ लेसार ट्रोकाण्टार सोयास । २० ट्रोकाण्टारिक लाइन ।

नं ४८ राइट लेग् स को वोनस याण्टिरियर सार्फेस।



१ स्पाइन। २ ईण्टार्नाल टिउवारसिटि। ३ एक्सटार्नाल टिउवारसिटि। ४ टिउवार्कल। ५ लिगामेण्ठ प्याटेलि। ६ सार्टोरियास, सेमिटेण्डिनोसास ग्रासिलिस ७ ईण्टार्नाल सार्फेस। ८ क्रेष्ट। ९ टिबियालिस यराण्टाइकास। १० ईण्टार्नाल म्यालिवोलाम। ११ एकष्टार्नाल टेण्डनले छोपने। १२ एकष्टार्नाल म्यालिवोलास। १३ सवकिउटेनियास १४ पेरोनियास टार्सियास। १५ एकष्टेनसार लंगास डिजिटोराम। १६ एकष्टेनसार लंगास ह्यालिउसिस। १७ पेरोनियास व्रिभिस। १८ पेरोनियास लंगास। १९ वाइसेप्स। २० एकष्टार्नाल लेटारल लिगामेण्ट। २१ ष्टाइलयड प्रोसेस। २२ त्रिभिया। २३ फिबिउला।

इन्टर्नल सर्फेसमा १ पिरामिडाल प्रसेस हुन्छ। नाम इन्टरम्यालिवोलास, यो प्रसेसको इन्नर सर्फेस कन्भेक्स र सावकुटेनियास हुन्छ। यो प्रसेसको आउटर सर्फेस स्मुथ र थोरै कन्केभ हुन्छ। आष्ट्राग्यालासको साथ आर्टिकुलेशन हुन्छ। येस्को आन्टीरियेर वर्डर हुन्छ। येसैमा डेल्टयेड लीगामेन्टको आन्टीरियेर फ्लइयर्स आटाच्मेन्ट हुन्छ। पोष्टीरियेर वर्डरमा १ ब्रर्ड डीप ग्रुभ हुन्छ। यो वोव्लिक भै डाउनवार्ड र इनवार्डदिग्मा जान्छ। यो ग्रुभ कोही २ को डवल हुन्छ। यो ग्रुभबाट टिवियालीस पोष्टाइकस र फ्लेक्सर लाङ्गस डिजिटोरम मासल्सको टेन्डन जान्छ।

इन्टर्नल म्यालिव्रोलासको समीटको वीहाईन्डमा १ राफ डिप्रेसन हुन्छ, तेसैमा आङ्कल जयन्टको इन्टर्नल ल्याटारुाल लीगामेन्ट आटाचमेन्ट हुन्छ।

---

## टिविया बोनको

आर्टिकुलेशन ३।

आयभमा—

फीमर बोन १

येक्सटर्नलमा—

फीवुला १

बीलोमा—

आष्ट्राग्यालास १

---

## टिवियाको

मासल्स ११।

१ सेमी मेम्ब्रेनोसस।

२ टिबियालीस आन्टाइकस।

३ येक्सटेन्सर लाङ्गस डिजिटोरम।

४ ग्राइसेप्स।

५ सार्टोरियास।

६ ग्रासाइलीस।

७ सेमिटेन्डीनोसस।

८ पप्लिटियास।

९ सोलियास।

१० फ्लेक्सर लाङ्गस डिजिटोरम।

११ टिबियालीस पोष्टाइकस।

---

## फीबुला बोनको बयान।

यो लेगको आउटर साइडमा रहन्छ। टिबिया भन्दा स्माल हुन्छ अरु लाङ्ग बोन्स भन्दा स्लेन्डर हुन्छ। येस्को अपर येक्सट्रिमिटी स्माल हुन्छ। टिबियाको हेडको ब्याकमा र नी जयन्टको बीलोमा रहन्छ। येस्को लोवर येक्सट्रिमिटी टिबियाको बीलोमा प्रोजेक्ट गर्छ, येसैले ... १ आङ्कल बन्छ। येस्को—

१ स्याप...

२ ...

वार्ड र फर्वार्डदिग्मा जान्छ। टिवियाको येक्सटर्नल ट्युवेरोसि-टीमा जो फ्यासेट छ, तसैको साथ यो आर्टिकुलर फ्यासेट आ-र्टिकुलेशन हुन्छ। येस्को आउटर साइडमा १ थीक राफ प्रामि-नेन्ट्स हुन्छ। यो प्वाइन्टेड हुन्छ। नाम ष्टाइलयेड प्रसेस, यो हेडको पोष्टीरियेर पार्ट देखि अपवार्डदिग्मा प्रोजेक्ट गर्छ। यो प्रामिनेन्समा वाइसेप्स ~~मासलको~~ टेन्डेन र नी जयन्टको लाङ्ग येक्सटर्नल ल्याटारपाल लीगामेन्ट आटाचमेन्ट हुन्छ, यो लीगा-मेन्टले यो टेन्डनलाई २ पार्टमा डिभाइड गराउँ छ।

ष्टाइलयेड प्रसेसको समीटमा सर्ट येक्सटर्नल ल्याटारपाल लीगामेन्ट आटाचमेन्ट हुन्छ।

हेडको सार्कमफारेन्स र वाकी पार्ट राफ हुन्छ। तसैमा आन्टीरियेर सुपीरियेर टिवियो फीवुलर लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को फ्रान्टमा १ ट्युवर्कल हुन्छ। येसैमा पेरोनियास लाङ्गस मासलको अपर र आन्टीरियेर पार्ट आटाचमेन्ट हुन्छ। येस्को वीहाईन्डमा अरु १ ट्युवर्कल हुन्छ, तसैमा पोष्टीरियेर सुपीरियेर टिवियो फीवुलर लीगामेन्ट र स्वलियास मासलको अपर फाइवर्स आटाचमेन्ट हुन्छ।

---

स्यापटको वयान।

येस्को ४ वर्डर्स र ४ सर्फेसेस हुन्छ।

४ वर्डर्सको नाम—

आन्टीरो येक्सटर्नल वर्डर १

आन्टीरो इन्टर्नल " १

पोष्टीरो येक्सटर्नल वर्डर १
पोष्टीरो इन्टर्नल „ १

४ सर्फेसको नाम—

आन्टीरियेर सर्फेस १
पोष्टीरियेर „ १
इन्टर्नल „ १
येक्सटर्नल „ १

आन्टीरो येक्सटर्नल वर्डरको बयान।

यो आवभमा हेडको फ्रान्ट देखि डाउनवार्डमा मिडिलको थोरै वीलोमा गै आउटवार्डदिग्मा वाइफरकेट हुन्छ। येक्सटर्नल म्यालिवोलासको आउटर सर्फेसको आवभमा १ ट्राइयाङ्गुलर साव-कुटेनियास सर्फेस हुन्छ। यो वर्डरमा इन्टरमास्कुलार सेप्टम आटाचमेन्ट हुन्छ। यो मासलले लेगको आन्टीरियेर सर्फेसको येक्सटेन्सर मासल र पेरोनियास लाङ्गस पेरोनियास व्रिभीस मासल्सलाई सेपारेट गराउँ छ।

आन्टीरो इन्टर्नल वर्डरको बयान।

येस्को दोस्रो नाम इन्टर वोसियास रिज भन्छन। यो वर्डर आन्टीरो येक्सटर्नल वर्डरको इन्नर साइडमा रहन्छ। यो आवभमा हेडको थिनीथदेखि वीलोमा १ राफ टाइयाङ्गुलर सर्फेसको येपेक्ससम्म जान्छ। यो येक्सटर्नल म्यालिवोलासको आर्टिकुलर फ्यासेटको आवभमा रहन्छ। यो वर्डरमा इन्टर वोसियास मेम्ब्रेन

आटाचमेन्ट हुन्छ। यो वर्डरले फ्रान्टको येक्सटेन्सर मासल्स र वीहइन्डको फ्लेक्सर मासल्सलाई सेपारेट गराउँ छ।

---

पोष्टीरो येक्सटर्नल वर्डको वयान ।

यो प्रमिनेन्स हुन्छ। यो आवभमा ष्टाइलयेड प्रसेसको वेसदेखि वीलोमो आउटर म्यालीवोलासको पोष्टीरियेर वर्डरसम्म जान्छ। यो आवभमा आओटवार्ड मिडिलमा व्याकवार्ड र थोरै इनवार्डदिग्मा जान्छ, येसैमा आपोन्युरेसिस आटाचमेन्ट हुन्छ। यो आपोन्युरेरिससले स्याफ्टको आउटर सर्फेसको पेरीनियाई मासल्स र पोष्टीरियेर सर्फेसको फ्लेक्सर मासल्सलाई सेपारेट गराउँ छ।

---

पोष्टीरो इन्टर्नल वर्डरको वयान ।

येस्को दोस्रो नाम वोब्लिकलाइन भन्छन। यो आवभमा हेडको इन्नर साइडदेखि लोवर फोर्थसम्म गै इन्टर वोसियास रिजको साथ मील्छ। येसैमा ओपोन्युरेसिस आटाचमेन्ट हुन्छ। येसले आवभमा टिबियालीस पोष्टाइकस र सोलियास मासल्स वीलोमा फ्लेक्सर लाङ्गस ह्यालयुसिस मासल्सलाई सेपारेट गराउँ छ।

---

आन्टीरियेर सर्फेसको वयान ।

यो आन्टीरियेर येक्सटर्नल र आन्टीरो इन्टर्नल वर्डरको बीचमा रहन्छ। येस्को अपर थार्ड न्यारो र फ्ल्याट हुन्छ। लोवर थार्डमा लञ्जीच्युडीनल ग्रुभ रहन्छ। येसैमा येक्सटेन्सर लाङ्गस

डिजिटोरम पेरोनियास टार्सास र येक्सटेन्सर प्रोप्रिअस ह्याल्युसिस मासल्स आटाचमेन्ट हुन्छ ।

---

येक्सटर्नल सर्फेसको बयान ।

यो आन्टीरो येक्सटर्नल र पोष्टीरो येक्सटर्नल बर्डर्सको बीचमा रहन्छ । यो अपर टु थार्डसमा आउटवार्डदिग्मा जान्छ । लोवर थार्डमा व्याकवार्डदिग्मा जान्छ । यो सर्फेसमा पेरोनियास ब्रिभीस पेरोनियास लाङ्गस मासल्स रहन्छ ।

---

इन्टर्नल सर्फेसको बयान ।

यो आन्टीरो इन्टर्नल र पोष्टीरो इन्टर्नल बर्डर्सको बीचमा रहन्छ । यो इनवार्डदिग्मा जान्छ । येसैमा १ ग्रुभ छ । तेसैमा टिबियालीस पोष्टाइकस मासल्स आटाचमेन्ट हुन्छ ।

---

पोष्टीरियेर सर्फेसको बयान ।

यो पोष्टीरो येक्सटर्नल र पोष्टीरो इन्टर्नल बर्डर्सको बीचमा रहन्छ । यो आबभमा व्याकवार्ड मिडिलमा व्याकवार्ड र इनवार्ड बीलोमा इनवार्डदिग्मा जान्छ । येस्को अपर थार्ड राफ हुन्छ, येसैमा सोलियास मासल आटाचमेन्ट हुन्छ । येस्को लोवर पार्टमा १ राफ ट्राइयाङ्गुलर सर्फेस छ । यो टिबियाको साथ १ष्ट्राङ्ग इन्टर ओसियास लीगामेन्ट दीयेर मील्छ । येसैमा फ्लेक्सर लाङ्गस ह्याल्युसिस मासलको फाइबर्स अरिजिन हुन्छ । यो सर्फेसको मिडिलमा १ न्युट्रियान्ट फोरामेन हुन्छ ।

## लोवर येक्सट्रिमिटीको बयान।

● येस्को दोस्रो नाम येक्सटर्नल म्यालियोलास भन्छन, येस्को आकार पिरामिडाल हुन्छ। यो लाङ्ग भै लोवरदिग्मा जान्छ। येस्को येक्सटर्नल सर्फेस कन्भेक्स र साबकुटेनियास हुन्छ। स्याफटको आउटर साइडमा जो ट्राइयाङ्गुलर सर्फेस हुन्छ तेसैको साथ मील्छ। येस्को इन्टर्नल सर्फेसको फ्रान्टमा १ स्मुथ टाइयाङ्गुलर फ्यासेट हुन्छ। यो आष्ट्राग्यालासको आउटर साइडमा जो सर्फेस छ, उसैको साथ आर्टिकुलेशन हुन्छ।

यो आर्टिकुलर सर्फेसको बीहाईन्ड र विनीथमा १ राफ डीप्रेसन हुन्छ। येसैमा आङ्कल जयन्टको येक्सटर्नल ल्याटास्याल लीगामेन्टको पोष्टीरियेर फ्यासिक्युली आटाचमेन्ट हुन्छ।

येस्को आन्टीरियेर वर्डर थिक र राफ हुन्छ। येस्को बीलोमा १ डीप्रेसन हुन्छ, तेसैमा येक्सटर्नल ल्याटास्याल लीगामेन्टको आन्टीरियेर फ्यासिक्युली आटाचमेन्ट हुन्छ।

पोष्टीरियेर वर्डर ब्रड हुन्छ, येसैमा १ स्यालो ग्रुभ हुन्छ, येसैबाट पेरोनीयास लाङ्गस र पेरोनीयास ब्रिभीस मासलको टेन्डन जान्छ।

येस्को समीट राउन्ड हुन्छ, येसैमा येक्सटर्नल ल्याटास्याल लीगामेन्टको मिडिल फ्यासिक्युलास आटाचमेन्ट हुन्छ।

### येस्को दिग छुट्याउँने चीन्ह।

येस्को लोवर येक्सटिमिटो डाउनवार्डदिग्मा राखनू पेरोनीयास मासलसको टेन्डन जाने ग्रुभ ब्याकवार्डदिग्मा राखनू टाइयाङ्गुलर साबकुटेनीयास सर्फेसले दिग छुट्याउँ छ।

## फीवुला बोनको

आर्टिकुलेशन २।

फ्रन्टर्नलमा—

टिबिया १

थीलोमा—

आष्ट्राग्यालास १

---

## फीवुला बोनको

मासल्स ९।

१ वाइसेप्स।
२ सोलियास।
३ पेरोनियास लाङ्गस।
४ पेरोनियास व्रिभीस।
५ पेरोनियास टार्सास।
६ येक्सटेन्सर लाङ्गस डिजिटोरम।
७ येक्सटेन्सर प्रोपिअस ह्याल्युसिस।
८ टिवियालीस पोष्टाइकस।
९ फ्लेक्सर लाङ्गस ह्याल्युसिम।

---

## फुटको वयान।

३ किसिमको वोन्सले फुट वन्छ।

टार्सास १
मेटा टार्सास १
फ्ल्याञ्जेस १

## टार्सासको बयान ।

टार्सास बोन्स ७ हुन्छन । नाम—

१ अस्क्यात्सीस, दोस्रो नाम क्याल्केनियाम ।
२ आष्ट्राग्यालास ।
३ क्युवयेड ।
४ न्याभीक्युलर ।
५ इन्टर्नल ।
६ मिडिल ।
७ येक्सटर्नल क्युनीयाई फारम बोन्स ।

## अस्क्याल्सीसको बयान ।

येस्को दोस्रो नाम क्याल्केनियाम बोन भन्छन, यो टार्सास बोन्सको भीत्र लार्ज र ष्ट्राङ्ग हुन्छ। यो फुटको लोवर र ब्याक-पार्टमा रहन्छ । यो बोनले जम्मा शरीरको बोन्स हरू थाम छ। येसैमा ६ सर्फेसेस हुन्छ।

| | | |
|---|---|---|
| सुपीरियेर | सर्फेस | १ |
| इन्फीरियेर | ,, | १ |
| इन्टर्नल | ,, | १ |
| येक्सटर्नल | ,, | १ |
| आन्टीरियेर | ,, | १ |
| पोष्टीरियेर | ,, | १ |

सुपीरियेर सर्फेसको बयान ।

अस्क्यालसोसको अपर र वीहाईन्डपार्ट ब्याकवार्ड प्रिम प्रोजेक्ट भै हिल बन्छ। यो सर्फेसलाई सुपोरियेर सर्फेस भन्छन यो साइडटुसाइड कन्भेक्स वीफोर देखि ब्याकवार्ड कन्केभ हुन्छ सुपोरियेर सर्फेसको मिडिलमा २ आर्टिकुलर फ्यासेट्स हुन्छ कोही कोहीको ३ आर्टिकुलर फ्यासेट्स पनी हुन्छ। १ ब्रड स्याले श्रभले येहि २ फ्यासेट्सलाई सेपारेट गराउँ छ। येसैमा अस्क्या लसीस र आष्ट्राग्यालासको कनेक्ट गराउँनलाई इन्टर वोसि येस लीगामेन्ट आटाचमेन्ट हुन्छ। यो २ आर्टिकुलर सर्फेस मध्ये येक्सटर्नल आर्टिकुलर सर्फेस लार्ज हुन्छ। येस्को इन्टर्नल आर्टिकुलर सर्फेसलाई १ प्रोजेक्टिङ प्रसेस आफ बोनले सपोर्ट गराउँ छ। यो प्रोजेक्टिङ प्रसेस आफ बोनको दोस्रो नाम लेसर प्रसेस आफ दी क्यालकेनियाम, येस्को अर्को नाम साष्टेन्टाम्यु ल्याटेलाई भन्छन। यो सर्फेसको आन्टीरियेरमा ग्रेटर प्रसेसको अपर सर्फेस देखिन्छ। यसैमा १ राफ डिप्रेसन छ तेसैमा धेरै लीगामेन्ट आटाचमेन्ट हुन्छ। येहि ठाउँमा १ ट्युवर्कल पनी देखिन्छ। तेसैमा येक्सटेन्सर ब्रिभीस डिजिटोरम मासल अरि-जिन हुन्छ।

---

६ फोरियेर सर्फेसको बयान ।

यो न्यारो राफ र साइडटुसाइड कन्भेक्स हुन्छ। यस्को पोष्टीरियेरमा २ ट्युवर्कल्स हुन्छ। येस्को बीचमा १ राफ डिप्रेसन हुन्छ। यो डिप्रेसनले यो २ ट्युवर्कललाई सेपारेट गराउँ छ।

न ५० राइट लेग को बोनस् पोष्टिरियार सार्फेस।




१, २, फिमार को साथ लगने। पपलिटियालनच् ४ स्टाइलयड प्रोसेस। ५ सोलियास। ६ फ्लेकसार लंगास ह्यालिउसिस। ७, ८ टिबियालिस पष्टाइकास। ९ पेरोनियास लंगास र ब्रिभिस लाइ गुभ। १० फ्लेकसार लंगास ह्यालिउसिस लाई गुभ। ११ फ्लेकसार लंगास डिजिटोराम र टिबियालिस पष्टाइकास लाइ गुभ। १२ फ्लेकसार लंगास डिजिटोराम। १३ वोवलिक लाइन, सोलियास्। १४ पपलिटियास। १५ सेमिमेम्ब्रेनोसास।

नं ५१ राइट फुटको बोनस डर्साल सार्फेस ।



१ टिबड़ो याकिलिस । २ अस्क्यालसिस । ३ फलेक-सार लगास ह्यालिउसिस लाइ ग्रुभ । ४ याष्ट्रा गेलास । ५ नेक । ६ हेड । ७ । नाभिकिउलार । ८ इण्टार्नाल किउनिफर्म । ९ मिड्ल किउनिफर्म । १० एक्स्टार्नाल किउनिफर्म । ११ किउबयड । १२ एक्स्टेनसार ब्रिभिस डिजिटोराम । १३ पेरोनियास ब्रिभिस लाइ ग्रुभ १४ पेरोनियास लगास लाइ ग्रुभ । १५ पोरानियास टार्सियास । १६ पोरानियास ब्रिभिस । १७, १८, १९, २०, एक्स्टेनसार लगास र ब्रिभिस डिजिटोराम । २१ एक्स्टेनसार लगास ह्यालिउसिस । २२ एक्स्टेनसार ब्रिभिस डिजिटोराम को इनासर्सन टेण्डन ।

र्नल ट्युवर्कल स्माल प्रामिनेन्ट र राउन्ड हुन्छ। येसैमा
क्टर मिनिमाई डिजिटाई मासलको १ पार्ट आटाचमेन्ट
। येस्को इन्टर्नल ट्युवर्कल ब्रड र लार्ज हुन्छ। येसले हिप-
सपोर्ट गराउँ छ। येस्को प्रामिनेन्ट इन्नर मार्जीनमा आब-
ह्यालयुसिस मासल आटाचमेन्ट हुन्छ। येस्को फ्रान्टमा
पर ब्रिभीस डिजिटोरम मासल आटाचमेन्ट हुन्छ। यो डि-
मा आवडाक्टर मिनिमाई डिजिटाई मासल र फ्ल्यान्ट र
। आटाचमेन्ट हुन्छ। ट्युवर्कलसको फ्रान्टमा १ राफ सर्फेस
तेसैमा लाङ्ग फ्ल्यान्ट, लीगामेन्ट र फ्लेक्सर आक्सेस
स मासलको आउटर हेड आटाचमेन्ट हुन्छ। यो सर्फेसको
रियेरमा १ प्रामिनेन्ट ट्युवर्कल हुन्छ र फ्रान्टमा १ ट्रान्स-
भ रहन्छ तेसैमा सर्ट फ्ल्यान्ट र लीगामेन्ट आटाचमेन्ट

---

येक्सटर्नल सर्फेसको बयान।

यो ब्रड फ्ल्याट र साबकुटेनियास हुन्छ। येस्को सेन्टरमा
र्कल हुन्छ तेसैमा येक्सटर्नल ल्याटास्याल लीगामेन्टको
ठ फ्यासिक्युलास आटाचमेन्ट हुन्छ। येस्को अपर र आ-
रेर पार्टमा येक्सटर्नल क्याल्केनियो आष्ट्राग्यालायेड लीगा-
आटाचमेन्ट हुन्छ। यो ट्युवर्कलको फ्रान्टमा १ न्यारो सर्फेस
तेसैमा २ वोब्लिक ग्रुभ हुन्छ। यो २ ग्रुभको बीचमा १ येलि-
रिज हुन्छ। नाम पेरिनीयाल ट्युवर्कल भन्छन येसैमा
र्नल यानुलर लीगामेन्टको फाइवर्स प्रसेस आटाचमेन्ट

हुन्छ। यो २ ग्रुभ्सको सुपीरियेर ग्रुभबाट पेरोनियास ब्रिभीस मासलको टेन्डन जान्छ। इन्फीरियेर ग्रुभबाट पेरोनियास् लाङ्गस मासलको टेन्डन जान्छ।

---

इन्टर्नल सर्फेसको बयान।

यो कन्केभ हुन्छ। बोब्लिक भै फर्वार्ड र डाउनवार्डदिग्मा जान्छ। येसबाट फ्ल्यान्ट र भेसल्स र नाभ्र्स फुटको सोलमा जान्छ। येसैमा फ्लेक्सर आक्सेस स्वरियास मासलको १ पार्ट आटाच-मेन्ट हुन्छ। यो सर्फेसमा १ येमिनेन्स आफ बोन हुन्छ। नाम लेसर प्रसेस, दोस्रो नाम साष्टेन्टाक्युलाम टेलाई भन्छन, यो अपर फोरपार्टबाट होराइजेन्टल भै इनवार्डदिग्मा प्रोजेक्ट गर्छ येसैमा टिबियालीस पोष्टाइकस मासलको टेन्डनको १ स्लीप आ-टाचमेन्ट हुन्छ। प्रसेसको आवभमा कन्केभ हुन्छ। येसैले आ-ष्ट्राग्यालासको आन्टीरियेर आर्टिक्युलर सर्फेसलाई सपोट गराउँछ। बीलोमा फ्लेक्सर लाङ्गस ह्याल्युसिसको टेन्डन जानलाई १ ग्रुभ हुन्छ। येस्को फ्री मार्जीन राफ हुन्छ। आङ्कल जयन्टको इन्टर्नल ल्याटास्याल लीगामेन्टको १ पार्ट आटाचमेन्ट हुन्छ।

---

आन्टीरियेर सर्फेसको बयान।

यो ट्राइयाङ्गुलर हुन्छ। येसैमा क्युबयेड बोनको साथ आ-र्टिकुलेशन हुन्छ। येस्को इन्नर बर्डरमा इन्फीरियेर क्याभिक्युलर लीगामेन्ट आटाचमेन्ट हुन्छ।

---

पोष्टीरियर सर्फेसको बयान।

यो राफ प्रामिनेन्ट र कन्भेक्स हुन्छ। आवभ भन्दा चौलो वाइड हुन्छ। येस्को लोवर पार्ट राफ हुन्छ। येसैमा टेन्डोयेकेलीस र प्ल्यान्टेरिस मासलको टेन्डन आटाचमेन्ट हुन्छ। येस्को अपर पार्ट स्मुथ हुन्छ। १ बासोले यो बोन र टेन्डनलाई सेपारेट गराउँ छ।

---

अस्क्याल्सीस बोनको

आर्टिकुलेशन २।

आष्ट्राग्यालास १
क्युबयेड १

---

अस्क्याल्सीस बोनको

मासल्स ८।

१ टिबियालीस पोष्टाइकस।
२ टेन्डोयेकेलीस।
३ प्लान्टेरिस।
४ आबडाक्टर ह्याल्युसिस।
५ आबडाक्टर मिनिमाई डिजिटाई।
६ फ्लेक्सर ब्रिभीस डिजिटोरम।
७ येक्सटेन्सर ब्रिभीस डिजिटोरम।
८ फ्लेक्सर आक्सेस सोरियास।

---

## आष्ट्राग्यालास बोनको बयान।

यो अस्क्यास्लीस वाहेक टार्सल वोन्स मद्धे यो लार्ज हुन्छ। यो टार्सासको मिडिल र अपर पार्टमा रहन्छ। आवभमा टिवियालाई सपोर्ट गर्छ। २ दिग्मा २ म्यालिवोलाइको साथ आर्टिकुलेशन हुन्छ। वीलोमा अस्क्यास्लीसको माथो रहन्छ। फ्रान्टमा न्याभिक्युलर वोनको साथ आर्टिकुलेशन हुन्छ। येसैमा ६ सर्फेसेस हुन्छ।

---

#### सुपीरियेर सर्फेसको वयान।

येस्को वीहाईन्डमा टिवियाको साथ आर्टिकुलेशन हुनलाई १ ब्रड स्मुथ ट्रक्लियार सर्फेस हुन्छ। यो सर्फेस फ्रान्ट भन्दा वीहाईन्ड ब्रड हुन्छ। वीफोर देखि व्याकवार्ड कन्भेक्स हुन्छ। येस्को फ्रान्टमा आष्ट्राग्यालासको नेकको अपर सर्फेस रहन्छ। येसैमा लीगामेन्ट आटाचमेन्ट हुन्छ।

---

#### इन्फीरियेर सर्फेसको वयान।

येसैमा २ आर्टिक्युलर फ्यासेट्स हुन्छ। यो २को वीचमा १ डिप ग्रुभ हुन्छ। यो ग्रुभ वोब्लिक भै फर्वार्ड र आउटवार्डदिग्मा जान्छ। अस्क्यास्लीसको अपर सर्फेसमा जो ग्रुभ हुन्छ उसैको साथ मिलि १ केनाल बन्छ। येसैमा ताजा भयामा इन्टर वोसियास क्यालकेनियो आष्ट्राग्यालायेड लीगामेन्ट रहन्छ। यो २ आर्टिक्युलर फ्यासेट्स मद्धे पोष्टीरियेर लार्ज हुन्छ। साइडटुसाइड कन्केभ हुन्छ। यो फ्यासेट्स मद्धे आन्टीरियेर फ्यासेट लङ्गी-

च्युडिनलदिग्मा कन्भेक्स हुन्छ। १ येलोभेटेड रिजले येसलाई २ भागमा डिभाइड गराउँ छ। येसैको पोष्टीरियेर भागको साथ अस्ग्यालसीसको लेसर प्रसेसको साथ आर्टिकुलेशन हुन्छ। आन्टीरियेर भागमा इन्फीरियेर क्यालकेनीयो न्याभिक्युलर लीगामेन्टको अपर सर्फेस आटाचमेन्ट हुन्छ।

---

इन्टर्नल सर्फेसको बयान।

येस्को अपर पार्टमा इन्नरु म्यालिवोलासको साथ आर्टिकुलेशन हुनलाई १ आर्टिकुलर फ्यासेट हुन्छ। यो आवभमा ट्रक्लियार सर्फेसको साथ मील्छ। बीलोमा १ राफ डिप्रेसन हुन्छ। येसैमा इन्टर्नल ल्याठास्याल लीगामेन्टको डीप पोर्सन आटाचमेन्ट हुन्छ।

---

येक्सटर्नल सर्फेसको बयान।

येसैमा १ लार्ज ट्राइयाङ्गुलर फ्यासेट हुन्छ। यो आवभ देखि डाउनवार्ड कन्केभ हुन्छ। येसैमा येक्सटर्नल म्यालीवोलासको साथ आर्टिकुलेशन हुन्छ। आवभमा ट्रक्लियार सर्फेसको साथ मील्छ। येस्को फ्रान्टमा १ राफ डिप्रेसन हुन्छ तेसैमा आङ्कल जयन्टको येक्सटर्नल ल्याटास्याल लीगामेन्टको आन्टीरियेर फ्यासिक्युलास आटाचमेन्ट हुन्छ।

---

आन्टीरियेर सर्फेसको बयान।

यो कन्भेक्स र राउन्ड हुन्छ। येसैले आष्ट्राग्यालासको हेड धन्छ। यो स्मुथ र ओभेल हुन्छ। वोन्नेक भै इनवार्ड र डाउन-

वार्डदिग्मा जान्छ। यो न्याभीक्युलर बोनको साथ आर्टिकुलेशन हुन्छ। येस्को आन्डर इन्नर सर्फेसमा १ स्माल फ्यासिट हुन्छ। आष्ट्राग्यालासको, हेडको तल १ कन्सट्रिक्टेड पोर्सन हुन्छ। येसलाई नेक आफ दी आष्ट्राग्यालास भन्छन।

---

पोष्टीरियेर सर्फेसको बयान ।

यो न्यारो हुन्छ। येसैमा १ ग्रुभ हुन्छ। यो वोब्लिक भै डाउनवार्ड र इनवार्डदिग्मा जान्छ। येसबाट फ्लेक्सर लाङ्गस ह्याल्युसिसको टेन्डन जान्छ। येस्को येक्सटर्नलदिग्मा १ प्रामिनेन्ट ट्युबर्कल हुन्छ। येसैमा येक्सटर्नल ल्याटाल्याल लीगामेन्टको पोष्टीरियेर फ्यासिक्युलास आटाचमेन्ट हुन्छ। यो ग्रुभको इन्नर साइडमा पनी १ स्माल ट्युबर्कल हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह ।

येस्को ब्रड आर्टिकुलर सर्फेस अपवार्डदिग्मा राखनू पर्छ, राउन्डहेडलाई फर्वार्ड तीर राखनू पर्छ, येक्सटर्नल म्यालिवोलासको साथ आर्टिकुलेशन हुनलाई जुन ल्याटाल्याल ट्राइयाङ्गुलर आर्टिकुलर सर्फेस हुन्छ। तेसैले छुट्याउँने चीन्ह।

---

आष्ट्राग्यालास बोनको

आर्टिकुलेशन ४ ।

टिबिया १
फीबुला १
अस्क्रयाल्सीस १
न्याभीक्युलर १

अस्त्र्यालिसस बोनको मासल छैन।

---

## क्युबयेड बोनको बयान।

यो फुटको आउटर साइड र अस्क्यालिससको फ्रान्टमा रहन्छ। फोर्थ र फिफ्थ मेटाटार्सास बोन्सको बीहाईन्डमा रहन्छ। येस्को आकार पिरामिडाल जस्तो हुन्छ। येस्को बेस इनवार्डदिग्मा जान्छ। येपेक्स आउटवार्डदिग्मा जान्छ। येस्को आन्डर सर्फेसमा पेरोनीयास लाङ्गस मासलको टेन्डन जानलाई १ डिप ग्रुभ हुन्छ। येसैले यो बोन चिन्हलाई सुविस्ता हुन्छ। येस्को—

६ सर्फेसेस हुन्छ।

३ आर्टिकुलर सर्फेसेस।

३ नान आर्टिकुलर सर्फेसेस।

---

### ३ नान आर्टिकुलर सर्फेसेसको बयान।

सुपीरियेर सर्फेस १

इन्फीरियेर „ १

येक्सटर्नल „ १

---

### सुपीरियेर सर्फेसको बयान।

येस्को दोस्रो नाम डर्सल सर्फेस भन्छन, यो अपवार्ड र आउटवार्डदिग्मा जान्छ। धेरै लीगामेन्ट, आटाचमेन्ट हुनलाई यो सर्फेस राफ हुन्छ।

---

इन्फीरियेर सर्फेसको बयान।

येस्को दोस्रो नाम फ्ल्यान्ट सर्फेस। येस्को फ्रान्टमा १ डिप ग्रुभ हुन्छ। यो वोब्लिक भै फर्वार्ड र इनवार्डदिग्मा जान्छ। येसैमा पेरोनियास लाङ्गसको टेन्डन रहन्छ। येस्को बीहाईन्डमा १ रिज हुन्छ। तेसैमा लाङ वयाल्केनीयो क्युवयेड लीगामेन्ट आटाचमेन्ट हुन्छ। यो रिज येक्सटर्नलदिग्मा गै जाहाँ टार्बिनेट हुन्छ तेसैमा १ येमिनेन्स हुन्छ, नाम ट्युवेरोसिटी आफ दी क्युवयेड। यो ठाउँमा १ कन्भेक्स फयासेट हुन्छ। १ सेसामयेड बोनको साथ आर्टिकुलेशन हुन्छ। यो ग्रुभको बीहाईन्डमा राफ हुन्छ। येसैमा सर्ट फ्ल्यान्ट र लीगामेन्ट र फ्लेक्सर ब्रिभीस ह्याल्युसिस मासलको फीउ फाइव्रर्स र टिबियालीस पोष्टाइकसको टेन्डनको १ फयासिक्युलास आटाचमेन्ट हुन्छ।

---

येक्सटर्नल सर्फेसको बयान।

यो सर्फेस स्माल र न्यारो हुन्छ, येसैमा १ डिप नच रहन्छ।

---

३ आर्टिकुलर सर्फेसेसको बयान।

पोष्टीरियेर सर्फेस १
आन्टीरियेर ,, १
इन्टर्नल ,, १

---

पोष्टीरियेर सर्फेसको बयान।

यो सर्फेस स्मुथ र ट्राइयाङ्गुलर हुन्छ। अस्क्याल्सिसको आन्टीरियेर सर्फेसको साथ आर्टिकुलेशन हुन्छ।

आन्टीरियेर सर्फेसको बयान।

यो स्माल हुन्छ। १ रिजले २ फ्यासेट्समा डिभाइड हुन्छ। इन्नर फ्यासेट क्वाडरि ल्याटरयाल हुन्छ। फोर्थ मेटाटार्सल बोनको साथ आर्टिकुलेशन हुन्छ। आउटर फ्यासेट लार्ज र ट्राइयाङ्गुलर हुन्छ। फीफ्थ मेटाटार्सल बोनको साथ आर्टिकुलेशन हुन्छ।

---

इन्टर्नल सर्फेसको बयान।

यो सर्फेस ब्रड र राफ हुन्छ। येस्को मीडिल र अपर पार्टमा १ स्मुथ बोभ्याल फ्यासेट हुन्छ। येक्सटर्नल क्युनिआई फारम बोनको साथ आर्टिकुलेशन हुन्छ। बोहाईन्डमा १ स्माल फ्यासेट हुन्छ। न्याभीक्युलर बोनको साथ आर्टिकुलेशन हुन्छ। येस्को बाकी भाग राफ हुन्छ। प्ट्राङ्ग इन्टर ओसियास लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह।

येस्को आन्डर सर्फेस जुन दिग्मा पेरोनियास ग्रुभ छ, त्यो डाउनवार्डतीर राखनू पर्छ। येस्को लार्ज पोष्टीरियेर आर्टिकुलर सर्फेस ब्याकवार्डतीर राखनू पर्छ। न्यारो नान आर्टिकुलर सर्फेसले बोनको दिग छुट्याउँ छ।

---

क्युनयेड बोनको

आर्टिकुलेशन ४।

| | |
|---|---|
| अस्क्याल्सिस | १ |
| येक्सटर्नल क्युनिआई फारम | १ |

फोर्थ मेटाटार्सास १
फीफ्थ मेटाटार्सास १ ८

कोही २ को न्याभीक्युलर बोनको साथ आर्टिकुलेशन हुन्छ ।

---

क्युनयेड बोनको
मासल्स २ ।

फ्लेक्सर ब्रीभीस ह्याल्युसिस १
टिबियालीस पोष्टाइकस १

---

## न्याभीक्युलर बोनको बयान ।

येस्को दोस्रो नाम स्क्याफ्कायेड बोन भन्छन । यो टार्सासको इन्नर साइडमा रहन्छ । येस्को बीहाईन्डमा आष्ट्राग्यालास र फ्रान्टमा ३ क्युनिआई फारम बोन्स रहन्छ । येस्को बीहाईन्ड कन्केभ र फ्रान्टमा कन्भेक्स हुन्छ, येसैले यो बोन चीन्हलाई सुबिस्ता हुन्छ ।

येस्को आन्टीरियेर सर्फेस साइड टु साइड कन्भेक्स हुन्छ । २ रिजले ३ फ्यासेट्समा डिभाइड गर्छ । येसैमा ३ क्युनिआई फारम बोन्सको साथ आर्टिकुलेशन हुन्छ ।

पोष्टीरियेर सर्फेस बोभ्याल र कन्केभ हुन्छ । आष्ट्राग्यालास बोनको साथ आर्टिकुलेशन हुन्छ ।

सुपीरियेर सर्फेस साइड टु साइड कन्भेक्स हुन्छ । लीगामेन्ट्स आटाचमेन्ट हुनलाई यो सर्फेस राफ हुन्छ ।

इन्टर्नल सर्फेसमा १ ट्युबर्कल ग्रेमीनेन्स हुन्छ। नाम ट्युब्रोसिटि आफ दी न्याभीक्युलर। यो लोवर पार्टमा प्रोजेक्ट गर्छ, येसैमा टिबियालीस पोष्टाइकसको टेन्डनको १ पार्ट आटाचमेन्ट हुन्छ।

येक्सटर्नल सर्फेस राफ र इरेगुलर हुन्छ। येसैमा लीगामेन्ट्स फाइवर्स आटाचमेन्ट हुन्छ। कोही २ को १ स्माल फ्यासेट हुन्छ। क्युवयेड बोनको-साथ आर्टिकुलेशन हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह।

येस्को कन्केभ आर्टिकुलर सर्फेस ब्याकयार्डतीर कन्भेक्स डर्सल सर्फेस अपवार्ड राखनू पर्छ, यो हिसापले पक्रदा येक्सटर्नल सर्फेसले यो बोनको दिग थाहा हुन्छ।

---

न्याभिक्युलर बोनको

आर्टिकुलेशन ५।

आष्ट्राग्यालास १

क्युनिआई फारम ३।

इन्टर्नल क्युनिआई फारम १

सिडिल ,, ,, १

येक्सटर्नल ,, ,, १

---

कोही कोहीको क्युवयेडको साथ पनी आर्टिकुलेशन हुन्छ।

येस्को मासल १।

टिबियालीस पोष्टाइकस १

## क्युनिआई फारम बोनको बयान।

यो ३ हुन्छन—

इन्टर्नल क्युनिआई फारम १
मिडिल क्युनिआई फारम १
येक्सटर्नल क्युनिआई फारम बोन्स १

---

इन्टर्नल क्युनिआई फारम बोनको बयान।

३ क्युनिआई फारम बोन्स मद्धे यो लार्ज हुन्छ। फुटको इन्नर साइडमा रहन्छ। येस्को बीहाईन्डमा न्याभिक्युलर बोन र फ्रान्डमा फाष्ट मेटाटार्सास बोनको बेस रहन्छ। येसैमा—

६ सर्फेस हुन्छ।

इन्टर्नल सर्फेस १
येक्सटर्नल ,, १
आन्टीरियेर ,, १
पोष्टीरियेर ,, १
इन्फीरियेर ,, १
सुपीरियेर ,, १

---

इन्टर्नल सर्फेसको बयान।

यो साबकुटेनियास हुन्छ। फुटको इन्नर बर्डरको १ पार्ट बन्छ। यो सर्फेस ब्रड र क्वाड्रि ल्याटास्याल हुन्छ। येस्को आन्टीरियेर इन्फीरियेर आङ्गलमा १ स्मुथ वोभ्याल फयासेट हुन्छ। येसैमा टिबियालीस आन्टाइकसको टेन्डनको १ पार्ट इन्सर्सन

हुन्छ। यो सर्फेसको बाकी भागमा लीगामेन्ट्स आटाचमेन्ट हुनलाई राफ हुन्छ।

###### येक्सटर्नल सर्फेसको बयान।

यो कन्केभ हुन्छ। येस्को सुपीरियर र पोष्टीरियर वर्डर्समा १ आर्टिकुलर सर्फेस हुन्छ। यो सर्फेसको बीहाईन्डमा मिडिल क्युनिआई फारम बोन र फ्रान्टमा सेकेन्ड मेटाटार्साल बोनको साथ आर्टिकुलेशन हुन्छ।

येस्को बाकी भाग राफ हुन्छ। येसैमा लीगामेन्ट्स र पेरोनियास लाङ्गसको टेन्डको १ पार्ट आटाचमेन्ट हुन्छ।

###### आन्टीरियेर सर्फसको बयान।

यो सर्फेसको आकार कीङ्गिको आकार जस्तो हुन्छ। यो पोष्टीरियेर सर्फेस भन्दा लार्ज हुन्छ। मेटाटार्साल बोन आफ दी ग्रेट्टोका साथ आर्टिकुलेशन हुन्छ।

###### पोष्टीरियेर सर्फेसको बयान।

यो सर्फेस ट्राइयाङ्गुलर र कन्केभ हुन्छ। न्याभीक्युलरको आन्टीरियेर सर्फेसमा जो ३ फ्यासेट्स हुन्छ, तेसैं मध्ये लार्जेष्ट फ्यासेटको साथ आर्टिकुलेशन हुन्छ।

###### इन्फीरियेर सर्फेसको बयान।

येस्को दोस्रो नाम फ्ल्यान्टर सर्फेस यो राफ हुन्छ। येस्को ब्याकपार्टमा १ प्रामिनेन्ट ट्युबेरोसिटि हुन्छ। येसैमा टिबिया-

लोस पोष्टाइकसको टेन्डनको १ पार्ट आटाचमेन्ट हुन्छ। यो सर्फेसको फ्रान्टमा टिबियालीस आन्टाइकस मासलको टेन्डनको १ पार्ट आटाचमेन्ट हुन्छ।

सुपीरियेर सर्फेसको बयान ।

यो सर्फेस न्यारो र राफ हुन्छ। येसैमा लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह ।

येस्को सुपीरियेर न्यारो येज अपवार्डतीर लाङ कीड्नी सेफ्ट आर्टिकुलर सर्फेस फर्वार्डतीर राखनू पर्छ। येक्सटर्नल सर्फेसले यो बोनको दिग छुट्याउँ छ।

इन्टर्नल क्युनिआई फारम बोनको

आर्टिकुलेशन ४ ।

न्याभीक्युलर १
मिडिल क्युनिआई फारम १
फार्ष्ट मेटाटार्साल १
सेकेन्ड मेटाटार्साल बोन्स १

इन्टर्नल क्युनिआई फारम बोनको.

मासल्स ३ ।

१ टिबियालीस आन्टाइकस।
२ टिबियालीस पोष्टाइकस।
३ पेरोनियास लाङ्गस।

## मिडिल क्युनिआई फारम बोनको बयान।

यो अरु २ क्युनिआई फारम बोन्स भन्दा स्माल हुन्छ। येस्को आकार वोयज जस्तो हुन्छ। येस्को ब्रड येक्सट्रिमिटी अपवार्ड र न्यारो दिग डाउनवार्ड रहन्छ। यो बोन अरु २ क्युनिआई फारम बोन्सको मिडिलमा रहन्छ। येस्को बीहाईन्डमा न्याभिक्युलर बोन र फ्रान्टमा सेकेन्ड मेटाटार्साल बोन रहन्छ।

येस्को इन्नर सर्फेसको अपर र ब्याकवार्डमा १ आङ्गुलर आर्टिकुलर फयासेट हुन्छ, येसैले यो बोनको थाहा हुन्छ।

येस्को ६ सर्फेस हुन्छ—

| | | |
|---|---|---|
| आन्टीरियेर | सर्फेस | १ |
| पोष्टीरियेर | ,, | १ |
| इन्टर्नेल | ,, | १ |
| येक्सटर्नेल | ,, | १ |
| सुपीरियेर | ,, | १ |
| इन्फीरियेर | ,, | १ |

---

आन्टीरियेर सर्फेसको आकार ट्राइयाङ्गुलर हुन्छ। यो पोष्टीरियेर सर्फेस भन्दा न्यारो हुन्छ। सेकेन्ड मेटाटार्साल बोनको येस्को साथ आर्टिकुलेशन हुन्छ।

पोष्टीरियेर सर्फेस ट्राइयाङ्गुलर हुन्छ। न्याभीक्युलर बोनको साथ आर्टिकुलेशन हुन्छ।

इन्टर्नेल सर्फेसको पोष्टीरियेर र सुपीरियेर वर्डर्समा १ आर्टिकुलर फ्यासेट हुन्छ। येसैमा इन्टर्नेल क्युनिआई फारम बोनको

साथ आर्टिकुलेशन हुन्छ, येस्को पाकी भागमा लीगामेन्ट्स आटाचमेन्ट हुन्छ।

येक्सटर्नल सर्फेसको पोष्टीरियेरमा १ स्मुथ फ्यासेट हुन्छ। येसैमा येक्सटर्नल क्युनिआई फारम बोनको साथ आर्टिकुलेशन हुन्छ।

सुपीरियेर सर्फेस क्वाड्रि ल्याटास्याल हुन्छ, येसैमा लीगामेन्ट आटाचमेन्ट हुन्छ।

इन्फीरियेर सर्फेस प्वाइन्टेड ट्युवर्कल र राफ हुन्छ। येसैमा लीगामेन्ट आटाचमेन्ट हुन्छ। टिवियालीस पोष्टाइकसको टेन्डनको १ श्लीप पनी इन्सर्सन हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह।

येस्को सुपीरियेर र डर्सल सर्फेस अपवार्ड तीर, ब्रडैयेज आफुतीर फर्काइ राखनू पर्छ। येसो गर्नाले स्मुथ फ्यासेटले यो बोनको दिग छुट्याउँ छ।

---

### मिडिल क्युनिआई फारम बोनको

आर्टिकुलेशन ४।

| | |
|---|---|
| न्याभीक्युलर | १ |
| येक्सटर्नल क्युनिआई फारम | १ |
| इन्टर्नल क्युनिआई फारम | १ |
| सेकेन्ड मेटाटार्सील बोन्स | १ |

येस्को मासल १

१ टिबीयालीस पोष्टाइकस।

येक्सटर्नल क्युनिआई फारम वोनको बयान।

येस्को आकार वोयेज जस्तो हुन्छ। यो मिडिल क्युनिआई फारम वोन भन्दा ठुलो र इन्टर्नल क्युनिआई फारम भन्दा सानु हुन्छ। येस्को ब्रड येक्सट्रिमिटी अपवार्ड र न्यारो येन्ड डाउनवार्ड रहन्छ।

येस्को ६ सर्फेसेस हुन्छ—

| | | |
|---|---|---|
| आन्टीरियेर | सर्फेस | १ |
| पोष्टीरियेर | ,, | १ |
| येक्सटर्नल | ,, | १ |
| इन्टर्नल | ,, | १ |
| सुपीरियेर | ,, | १ |
| इन्फीरियेर | ,, | १ |

आन्टीरियेर सर्फेस ट्राइयाङ्गुलर हुन्छ। येसैमा थार्ड मेटाटार्सल वोनको साथ आर्टिकुलेशन हुन्छ।

पोष्टीरियेर सर्फेस न्याभीक्युलर वोनको येक्सटर्नल फ्यासेटको साथ आर्टिकुलेशन हुन्छ।

इन्टर्नल सर्फेसमा २ आर्टिकुलर फ्यासेट्स हुन्छ, यो २ को बीचमा १ राफ डीप्रेसन हुन्छ, यो २ फ्यासेट्स मद्धे आन्टीरियेरमा सेकेन्ड मेटाटार्सल वोनको वेसको आउटर साइडको साथ आर्टिकुलेशन हुन्छ। पोष्टीरियेर फ्यासेट मिडिल क्युनिआइ फारम वोनको साथ आर्टिकुलेशन हुन्छ। राफ डीप्रेसनमा इन्टर वोसियास लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येक्सटर्नल सर्फेसमा २ आर्टिकुलर फयासेट हुन्छ। येस्को बीचमा १ राफ नान आर्टिक्युलर सर्फेस हुन्छ। आन्टीरियर फयासेट स्माल हुन्छ। फोर्थ मेटाटार्साल बोनको बेस्को इन्नर साइडमा आर्टिकुलेशन हुन्छ। पोष्टीरियेर र फयासेट लार्ज हुन्छ, येसैमा क्युवयेड बोनको साथ आर्टिकुलेशन हुन्छ। नान आर्टिकुलर सर्फेसमा इन्टर वोसियास लीगामेन्ट आटाचमेन्ट हुन्छ।

सुपीरियेर सर्फेसको दोस्रो नाम डर्सल सर्फेस। येस्को पोष्टीरियेर येक्सटर्नल आङ्गल व्याकवार्डमा प्रोलङ्गेड गर्छ।

इन्फीरियेर सर्फेस, दोस्रो नाम प्लयान्ट सर्फेस। येस्को मार्जीन् राउन्ड हुन्छ। येसैमा टिबियालीस पोष्टाइकसको टेन्डनको १ पार्ट र फ्लेक्सर ब्रोभीस ह्याल्युसिस मासलको १ पार्ट र लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को दिग छुट्याउँने चीन्ह।

येस्को ब्रड डर्सल सर्फेस अपवार्ड राखनू। प्रोलङ्गेडयेज व्याकवार्ड राखनू पर्छ। क्युवयेडको साथ आर्टिकुलेशन हुने फयासेटले यो बोनको दिग छुट्याउँछ।

---

### येक्सटर्नल क्युनिआई फारम बोनको

आर्टिकुलेशन ६।

| | |
|---|---|
| न्याभीक्युलर | १ |
| मिडिल क्युनिआई फारम | १ |
| क्युवयेड | १ |
| सेकेन्ड मेटाटार्साल | १ |

थार्ड मेटाटार्साल १

फोर्थ मेटाटार्साल बोन्स १

येस्को मासल २

१ टिबियालीस पोष्टाइकस।

२ फ्लेक्सर ब्रोभीस ह्यालुसिस।

---

मेटाटार्साल बोन्सको बयान।

यो ५ हुन्छन। यो लङ बोण हुन्छ।

येस्को— १ स्याफ्ट।

२ येक्सट्रिमिटीज हुन्छन।

---

इन्टर्नल बर्डरको बयान।

येस्को आकार प्रीजमयेड जस्तो हुन्छ। येस्को वीलो कन्केभ आवभ थोरै कन्भेक्स हुन्छ।

येस्को पोष्टीरियेर येक्सट्रिमिटीको दोस्रो नाम बेस, येस्को आकार वोयेज जस्तो हुन्छ। टार्साल बोन्सको साथ आर्टिकुलेशन हुन्छ।

ल्याटाराल सर्फेसमा मेटाटार्साल बोन्सको साथ आर्टिकुलेशन हुन्छ।

डर्सल र फ्यान्टर सर्फेसेसमा लीगामेन्ट आटाचमेन्ट हुन्छ।

येस्को आन्टीरियेर येक्सट्रिमिटी दोस्रो नाम हेड। येसैमा १ राउन्डेट आर्टिकुलर सर्फेस हुन्छ। येस्को साइड्स फ्ल्याट हुन्छ, येसैमा १ डीप्रेसन हुन्छ, येसैमा लीगामेन्ट्स आटाचमेन्ट हुन्छ।

येस्को आन्डर सर्फेसको मिडिल लाइनमा फ्लेक्सर टेन्डन जानलाई ग्रुभ हुन्छ।

## फाष्ट मेटाटार्सोल वोनको बयान।

यो अरु मेटाटार्सोल भन्दा सर्ट र थिक हुन्छ। येस्को स्याफ्ट प्ट्राङ हुन्छ। येस्को पोष्टीरियेर येक्सट्रिमिटीमा स्याटा स्याल आर्टिकुलर फ्यासेट छैन्। येस्को टार्मिनेल आर्टिकुलर सर्फेस लार्ज र कीड्नी सेप्ट हुन्छ। येस्को सार्कमफारेन्समा १ग्रुभ हुन्छ। येसैमा टर्सो मेटाटार्सोल लीगामेन्ट आटाचमेन्ट हुन्छ। येस्को इन्टर्नेलमा टिवियालीस आन्टाइकस मासलको टेन्डनको १ पार्ट आटाचमेन्ट हुन्छ।

येस्को इन्फीरियेर आङ्गलमा १ राफ वोभ्याल प्रामिनेन्स हुन्छ, तेसैमा पेरोनियास लाङ्गस मासलको टेन्डन इन्सर्सन हुन्छ।

येस्को हेड लार्ज हुन्छ। येस्को फ्ल्यान्ट र सर्फेसमा २ग्रुभ भयाको फ्यासेट्स हुन्छ। येसैमा सेसामयेड वोन्स ग्लाइड गर्छ।

यो वोनको वेसमा कीड्नी सेप्ट आर्टिकुलर सर्फेस हुनाले थाहा हुन्छ। यो कीड्नी सेप्ट आर्टिकुलर सर्फेसको कन्केभ वर्डरले यो वोनको थाहा हुन्छ।

फाष्टमेटाटार्सोल वोनको

आर्टिकुलेशन २।

आघभमा—

इन्टर्नेल क्युनिआई फारम १

